नेहरू बाल पुस्तकालय

# भारतका वीर बालकहरू

श्रीग्रुन श्रीवास्तव

चित्रांकन

रवी पारांजपे

अनुवादक

आर० पी० लामा



नेशनल बुक ट्रस्ट, इंडिया

ISBN : 81-237-1255-3

पहिलो संस्करण 1995 *(शक : 1916)*



रू. 7.50

**India's Young Heroes** ***(Nepali)***

निर्देशक, नेशनल बुक ट्रस्ट इंडिया

ए–5 ग्रीन पार्क, नयाँ दिल्ली–110016 द्वारा प्रकाशित

# विषय सूची























# निर्मला, सर्प र सयल

निर्मलालाई सयल लहनुभाई भोया मन पर्दैन्थ्यो, उसलाई पटक्कै मन पर्दैन्थ्यो। "कलूगीबेन तिम्री ठूली छोरीलाई हेर, उ साँच्चैनै सुन्दरी देखिन्छे। उसको सुन्दर र मधुर मुस्कानले चाँड़ैनै तन्हेरीहरूको टाउको घुमाउनेछ," सयलकी आमा कलूगी बेनलाई किन यसो भन्थी, उसले बुझ्दैनथी।

निर्मलाले रिसले गनगनाँउदै भनी, "यो सुन्दर मुस्कान होइन, दाँत देखाउनु बाहेक अरू केही होइन।" तर निर्मलालाई थाहा थियो सयल लहनुभाइमा आकर्षक मुस्कान थियो जुन हठात उसकी कलिलो गोलो अनुहारमा पर्दा उसकी ठूला एवं गम्भीर आँखाहरू चम्कन्थी।

उसको सानो चेप्टो नाक केही खुमचन्थ्यो अनि कलिलो गालामा ससाना दुइवटा खोपिल्टा देखिन्थे।

उसको मुस्कान आकर्षक हुनसक्छ तर उसको धेरै ठाउँ टालेको चोलो र रंग उड़िसकेको साड़ी निश्चय आकर्षक थिएन। सयलले प्रत्येक हातमा लगाएकी तीनवटा पातलो हातिदाँतको चुरा, निर्मलाको चम्किला र ठूला हारसित कुनै तुलनामै आँउदैनथ्यो।

गुजरातको बरताद नामक आदिबासी गाउँमा निर्मलाको जस्तो सुन्दर हार अरू कसैको थिएन। त्यो हार चम्किला राता जपमालाले बनिएको र एउटै रातो धागोमा

उनिएको थियो। खोलामा लुगा धुनु जाँदा भेट हुदाँ सयलले पनि यस हारको प्रशंसा गरेकी थिई।

"कति सुन्दर ! निर्मला, मलाई पनि छेउबाट हेर्न देऊ" सयलले भनेकी थिई।

तर निर्मलाले अहंकारसाथ आफ्नो टाउको घुमाएर ढुगांमा जोड़सित लुगा पिट्न लागेकी थिई।

"हेर त," सयलले हठात भनी, "एउटा थाइ्.गनोले गुड़ँ बनाउने चरा," "यो त केवल भडेरा हो।" "होइन निर्मला, यो चराको पहेंलो छाती छ, तिमी कसरी, भन्छौ यो भङेरा जस्तो देखिन्छ भनेर।"

निर्मलाले चरालाई फेरि एक पटक हेरी। "हो अलिक फरकै देखिन्छ।" सयलको कुरो सँधै जस्तो ठीक थियो। सयलको कुरो सँधै ठीक हुन्थ्यो यसैले निर्मलालाई सयल मन पर्दैनथ्यो। वास्तवमा निर्मलाले सोच्थँी सयल सबै कुरो जान्दथी। गाउँमा एकैजना व्यक्तिमात्र थिए जसले सयललाई सिकाउन सकथ्यो, तिनी थिए गाउँले स्कूल प्राथमिक शालाका शिक्षक। सयलले स्कूललाई माया गर्थी तर निर्मला मौका पाउन साथै खेततिर दगुर्थी।

"निर्मला, निर्मला," झुप्रो भित्रवाट उसकी आमाले बोलाइन्। "आठ बजि सक्यो। गाईवस्तुलाई वाहिर लाने कोही छैन। नानी छिटो गर, स्कुल कुनै अर्को दिन गए पनि हुन्छ।" निर्मला कुदी अनि गाईवस्तुलाई लखेट्दै गाउँको बाटो तर्फ लागी। गाउँको अन्तमा उसले लथालिड्.ग भएको माटोको झोपड़ी भेटे। पुराना भाँड़ाहरू यत्रतत्र छरिएका थिए, तीनवटा दुबला कुखुराहरू चामलका केही दानाहरूको खोजीमा थिए। झोपड़ीको अघिल्तिर नौ वर्षकी केटी चामल केलाउदै पलेती मारेर बसिरहेकी थिइ।

"भिजाकुमार!" उसको छेउमा बसिरहेको अर्को सानो केटोलाई हकार्दै भनी—"काँचो चामल नखाउ, तिमी चरा होइनौ।" सानो केटोले खित्का छोड़े, उतातिर सानो केटीले निर्मलालाई हेरी र मुस्काइ। "निर्मला, आज तिमी गाईवस्तुलाई कहाँ चराउन लाँदैछौ ?"

निर्मलाले आफ्नो कुम हल्लाइ र सयल लहनुभाइकी मिलनसार बहिनीको प्रश्न टार्न खोजी।

"तिमी तल कुलोतिर गए, हाम्रो गाइवस्तुसित सयललाई पनि त्यही भेट्न सक्छौ।"

"गाईवस्तु ! कसरी दुइचारवटा बाख्राहरू गाईबस्तु हुनसक्छ ?" निर्मला जबरजस्ती मुस्कुराइ र भनी–"गएँ मिराभाई।" केही फरलाङ टाड़ो गएपछि, उसले कुलो जाने बाटो छोड़ी गाई-वस्तु लिएर जंगलतिर लागी जहाँ एउटा फाँड़िएको जगहमा गाई-वस्तुको चरण बनिएको थियो।

जंगल उष्ण र गरम थियो। भुसुनाहरू आफ्नो निष्तब्ध रागमा उसको टाउकोको वरिपरि नाच्दथे। चराहरूको रमाइला आवाजले हावा भरिएको थियो। लोखर्के पिपलको रूखमा चढ़थ्यो, अर्कोतिर ठूला पाङरे हङरायो आफ्ना ठूला, ठूला पखेटा फिजाँएर उड़थे। निर्मला हंगरायोका काला-सेता रंगका पखेटाहरू भूईमा खोज्थी तर पाउँदैनथी। हताश भएर अल्छे भैसीतर्फ फर्कन्थी र कराँउथी-"हि-हो-ओ- - - हिड़- - - हिड़।"

उ जब त्यस चरणमा पुगी, निर्मला रीसले झण्डै रोई। किनभने उसको बरको रूखमुनिको प्यारो जगहमा कोही बसिरहेको थियो, उसको ढाड़ रूखतिर ढल्केको थियो-उ सयल लहनुभाई भोया थिई। वाह् वर्षको जस्तो पनि नदेखिने, उ सपना देख्दैथिइ, उसको पातलो खुट्टा मुनि झुण्डिरहेको थियो। रंग उड़ेको साड़ीको आधा भागले उसले आफ्नो केश छोपेकी थिई। केशको वीचमा सिउँदो र पछिल्तिर लगेर डल्लो पारेकी थिइ।

गाईको घण्टीको मधुर आवाज सुनेर उ झस्की। निर्मलालाई देखेर उसको अनुहारमा मुस्कुराहट छायो र हात हल्लायो "कस्तो छौ निर्मला? आउ यहाँ छहारीमा"

तर निर्मलाले उसको केही वास्ता गरीन र भैसीहरूसितनै उ व्यस्त रही। उसले सम्झी, "म तल कुलो तिरनै जान्छु वा अरू कुनै ठाउँ सयलदेखि टाड़ो।"

सयलले भनी–"निर्मला आऊ, म तिमीलाई केही साँच्चीकै चाखलाग्दा कुराहरू देखाउँछु।"

"चाखलाग्दो !" निर्मलालाई सयलका चाखलाग्दा कुराहरू के हुन् थाहा थियो। ती जम्मै स्कूल जस्तै नीरस र दिक्कलाग्दो छन्। रिसले निर्मलाले आफ्नो खुट्टाको बुढ़ी औंलाले बाक्लो झार कोटयाउन थाली।

गाई-वस्तु रसिला र नरम घाँसको खोजीमा अरूतिर लागे। वरपर हेर्दा निर्मलाको

नजर केही पोथ्राहरूमा परयो जहाँ लोभलाग्दो छहारी थियो। उ घुँडासम्म आउने त्यो झाड़ी भित्र पसी।

"ए निर्मला, तिमी किन यहा आउँदैनौ ?" निर्मलाले नाक खुम्च्याइ र बन्द गरी।

"स्याँक्क" - - - - , निर्मला एकै डल्लो परी।

"स्याँक्क" - - - - ।

यस आवाजले उसको ढाड़सम्म चिसो हाल्यो र थरथर काम्ने बनायो। उसले घुमेर गोलो, डरलाग्दो सर्पको आँखा तिर हेरी, सर्पको राक्षस, बाह्र फूट भन्दा लामो ठूलो अजिगंर। अजिगंरको हरित-फूम्रो, र कड़ा हाड़भएको शरीरमा हीराको आकारमा गहिरो खैरो रंग वगेको थियो। अजिगंरको शरीरको तल्लो हिस्सामा पहेँला र फूम्रा दागहरू देखिन्थे।

निर्मलाको हात अनायसै आफ्नो मुखमा परयो। उ चिच्याउन चाहन्थी, तर सकिन। लट्टिएर उसले अजिगंरको गोलो कालो आँखाको रानीमा हेरी रही जो अहिले सूर्यको तीब्र ज्योतिमा सानो भएको थियो।

अजिगंरले शिर उठायो। फेरि डरलाग्दो प्रकारले स्याँक्क - - - गरयो। निर्मलाले आफ्नो जीवनमा यस प्रकारको भयंकर वा डरलाग्दो प्राणी देखेकी थिइन। न यस्तो आवाज सुनेकी थिईन। "गुहार," उ कराउन अनि भाग्न चाहन्थी तर अजिगंरले उसलाई लट्टयाएको जस्तो देखिन्थ्यो। बूढ़ी लक्ष्मीवाइको भनाइ ठीक थियो। उसले भनेकी सर्प, घड़ियाल तथा ठूला-ठूला छेपाराका कथाहरू सबै साँचो थिए। सर्पले मानिसहरूलाई लटाउँद रहेछ।

अकस्मात अजिगंरको टाउको अघि सरयो। प्रायः यसै समय अजिगंरले आफ्नो पुच्छर पनि उठायो। अनि निर्मलाको घूड़ाँमा दुइ फनको बेह्रियो। उसको हड्डि टुक्रा-टुक्रा भएको जस्तो उसलाई लाग्यो। निर्मला पीड़ाले कराइ। तर पीड़ाभन्दा वढ़ी निर्मलालाई डर लागेको थियो। "म अब मर्छु" उसले सम्झी र पुकारी "अमा मलाई सहायता गर।"

अजिगंरलाई उ पन्साउन चाहन्थी तर छुने आँट गरिन। "सर्पलाई छुए, कोढ़को विमार हुन्छ" भन्ने कुरो उसलाई स्मरण-भयो। अजिगंरले निर्मलालाई जिउँदै निल्न सक्थ्यो। कति अजिगंरहरूले मानिसहरू जिउँदै निल्छन् भन्ने कथा बूढ़ी लक्ष्मीवाइले

सँधै भन्ने गर्थिन् ।

डर सरीको आँखाले उसले मड़ारिएर बसेको अजिगंरलाई तलतिर हेरी ।

अजिगंर दोस्रो पटक निर्मलाको कम्मरमा बेह्रिन लागेको थियो । त्यही बखत बाँसको लाठीको बज्र उसमा पर्‍यो, यसले अजिगंर चलमलाउन छोड़्यो ।

सयल ! सयल आएकी थिइ ।

अजिगंरको ढाड़मा निर्दयतापूर्ण बाँसको लौरो घरिघरि बज्रियो । ठूला अजिगंरको शरीरमा भूँइचालो आए जस्तो भयो तर यसले आफूले वेह्रेको खुट्टा छोड़ेन ।

"सयल!! सयल!! म मर्दैछु," निर्मला चिच्चाइ ।

"मर्दैनौ" होइन, होइन, तिमी मर्दैनौ ।" सयल कराइ । उसले हताश भएर मड़ारिएर बसेको अजिगंरलाई हिर्काउन थाली ।

निर्मला चिच्चाइ-"मलाई विष लागेको जस्तो लाग्दैछ ।"

"यो अजिगंर हो, विषालु हुदैन," सयल कराई

"तर म यसलाई हटाउन सक्तिन" ।

"तिमी डरले विचलित भएकी छौ, यसैले तिमीले यसलाई हटाउन सक्दैनौ, म सहायता गर्छु तिमीलाई ।"

लाठोको बज्रले यो भीषण अजिगंरलाई केही हुने नदेखेर सयलले लाठी फ्याँकी अनि आफ्नो हात प्रयोग गरी । अजिगंरको चिउँड़ो उसले बलियोसित समाती अनि मुख खोल्न कोशिश गरी ।



"सयल, तिमीलाई यसले ठुङ्छ,"

"यसले सक्तैन" उसले दाँत किटेर भनी, "यसले ठुङ्न सक्तैन।"

"आ- - याः यसले मेरो खुट्टा भाँच्दैछ।"

"शान्त होऊ, निर्मला, तिमी दया गरी।"

निर्मलाले मन बलियो गरी। उसले सयलको कसिएको अनुहार हेरी, ससाना खैरो हातहरूले थर थर काम्दै अजिगंरको मुख खोल्न कोशिश गरेकी देखी। दाँत किटेर सयलले आफ्ना हात अजिगंरको घाँटीभित्र हाल्दै गरेकी निर्मलाले देखी। उनको निधारमा पसिनाका दानाहरू देखिए अनि हातबाट रगतका थोपाहरू चुहुँदै थिए। "के यो सयलकै थियो वा उ आफ्नो?"

अजिगंर बेदनाले भयंकर छटपटायो। अजिगंर अत्यन्तै बलियो छ। सयलले योसित लड़ाँई गर्न कदापि सक्तैन ! अजिगंरले दुवैलाई मार्नेछ।

अकस्मात अजिगंरको दुवै बंगारो खोलियो।

"खुट्टावाट अजिगंर हटाऊ, यसलाई लात लगाऊ।" सयल कराइ र आफ्नो भएभरको शक्तिले अजिगंरको बंगारो समाती।

अजिगंर जस्तै वेदनाले छटपटाएर निर्मलाले आफ्नो खुट्टा झट्काइ, यता उता आपनो शरीरलाई तानी। उसको खुट्टामा वेह्रिएको कुरो केही खुकुलो र हल्का भयो। एउटा ठूलो खुट्टाको झट्का र एक पटक तान्दा उ अजिगंरदेखि फुत्किन सकी। छुटकारा पाएकी निर्मला झट्टै केही पर सरी।

तर भूँइमा भने अघिभन्दा अझ तीव्र लड़ाँई शुरू भयो।

"भाग निर्मला, तिमी आफैलाई बचाऊ," सयल कर्कश स्वरमा कराई। तर निर्मला जान सकिन, किनभने उसले सयललाई सहायता गर्नुथ्यो। तर असहाय भएर उसले सयलका कमजोर कुमहरू हेरी जसले अजिगंरको टाउको उदेखि टाड़ो राख्न कोशिश गरिरहेकी थिई।

अजिगंरले डरलाग्दो आवाज निकाल्यो। यसको टाउको अघि सरयो अनि सयलको छाती छेउमा पुग्यो। अजिगंरको दुवै बंगारो अलग्गै समातेर, अजिगंरलाई एक टक लगाएर हेर्दै सयल फेरि कराई–"भाग निर्मला, भाग।"

तर निर्मला कराई, "सयल! सयल!" डरले शक्तिहीन भएर उसले अजिगंरले भयंकर रीसले सयललाई आक्रमण गरेको देखी।

"सयल! सयल!"

"भाग, भाग," सयलका आवाज धीमा थियो।

हतासमा, आफूमा भएभरको शक्तिको प्रयोग गरी उसले अजिगंरको टाउको केही पर फँयाकी अनि बिजुली जस्तो आफ्नो खुट्टामा उभिइ र अजिगंरले नभेट्ने गरी पर सरी।

"भाग निर्मला, गाईवस्तु भएको ठाँउमा जाऊ।"

निर्मला दौड़ी, पछि फर्केर हेरिन, फेरि कहिले हेरिन र भाग्दै गइन्।

केही समय पछि सयलले उसलाई भेटी र उसको हात समाती। दुवै त्यहाँबाट कुदी र चरणको सामुन्ने शान्तसित चरिरहेका गाईवस्तु कहाँ पुगेरमात्र बसी।

स्याँ स्याँ गर्दै दुवैले एक अर्कालाई हेरी। निर्मलाको आँखा आँसुले भरियो र ओठ काम्न लाग्यो। "नरोऊ," सयलले भनी, "तिमी ठीक हुन्छौ।" "अँ तर सयल, सयल यसले मलाई मार्ने थियो तिमी नभएको - - - - -"

"यसको कुरा नगर, सब ठीक छ।"

निर्मलाले सयललाई पहिलो पटक भेटेको जस्तो हेरी।

"सयल" निर्मलाले विस्तारै भनी-"म मेरो हार तिमीलाई दिन चहान्छु।"

"किन निर्मला, किन ? मैले जस्तै तिमीले पनि मलाई सहायता गर्ने थियौ।"

निर्मलाले टाउको निहुराइ अनि खुट्टामा हेरी। केही समयपछि उसले भनी, "म केही जान्दिन, साँच्चै म केही जान्दिन।"

त्यसपछि उसले आफ्नो काम्दै गरेको औंलाले आफ्नो हार निकाली र भनी "दया गरी यो स्वीकार गर।"

सयल लहनुभाइ भोयाले सानी केटीको आँखामा धेरै बेरसम्म हेरिरही। विस्तारसित उसको कलिलो पहेंलो अनुहारमा चम्किलो मुस्कान देखियो। "म लिन्छु," उंसले विनम्र भावमा भनी, "म लिन्छु।"

# निमेष भरमा नै केही गर्नु पर्ने

गोबिन्दन स्कूलको घण्टीको प्रतीक्षामा थियो। स्कूल मन नपरेर होइन, उसलाई स्कूल मन पर्थ्यो। अनि अंग्रेज़ी शिक्षक श्रीमती शित्रा लेहालाई उसले अत्यन्तै रूचाँउथे।

गोबिन्दन तमिलनाडुको कुरूबारापल्ली हाई स्कूलको आँठौ श्रेणीका अगुवा थिए अनि अध्ययन मन पराउँथे। तर उसलाई गाँउमा घुमफिर गर्न विशेष आनन्द लाग्थ्यो अनि केही चाखलाग्दा कुराहरू पाए त्यसको खोजी गर्ने गर्थे। अनि तेह्र वर्ष पुगेका ठिटोलाई पल्लब वंशले बनाएको पौराणिक नटराजन मन्दिरभन्दा अरू चाखलाग्दो कुरो के हुनसक्थ्यो। यसै जगहमा रवि अनि उ स्कूल सकिएपछि जाने गर्थे।

"गोबिन्दन", श्रीमती शित्रा लेहरको आवाजले उसलाई श्रेणीको कक्षा भित्र फर्काई ल्याउथ्यो। उ जोड़सित बस्यो, जानी जानीकन आफ्नो छोटो कुर्लुङे केश पछिल्तिर लग्यो अनि शिक्षकले केही प्रश्न सोध्छ कि भन्ने कुरोले, उसको अनुहारमा लज्जापन देखापर्‌यो।

"हजुर गुरूमा ?"

"यी खाताहरू मेरो घरमा पुर्‌याइदिनु। स्कुल छुट्टी हुने बेला भएकोले तिमी अहिलेनै गए हुन्छ।"

"हुन्छ गुरूमा!"

गोबिन्दनले उसको स्कूलको झोला समात्यो। दैलोदेखि निस्कन भन्दा अघि उसले रविलाई जानि जानि धक्की लगायो र केही सकेंत गर्दै आँखा झिम्कायो।

उनीहरू सँधै जस्तै जानकीरामको मीठो नरिवल पाउने दोकानमा भेट्ने भए।

तर सेप्टेम्बर ३, १९७९ को दिन तिनीहरूले सल्लाह मिलाए जस्तै भेट भएन।

बाहिर निस्किएपछि किताबको थाक काखीमा राम्ररी च्यापेर गोबिन्दनले वरपर हेरे। कुरूबारापल्ली मुख्य सड़क सिंचित खेत र नरिवलका बारीहरू भएर घुमेर गएको थियो। उसको देब्रेपट्टि दुइ माइल टाड़ा गाँउमा धानका परालको छाना भएका कुटीरहरू अपराह्नको घामको उज्यालोमा स्नान गरेको जस्तो देखिन्थ्यो। अनि गाँउको छेउमा उसले नटराजन मन्दिरको भग्नावशेष देख्थे र सुस्तरी हल्लिरहेका खजुरका रूखहरू र बाक्लो धानका खेतहरूमाझ हिजका गौरवका सपना देख्थे।

स्कूलको पल्लोपट्टि बाटोको दाहिनेपट्टि एउटा ट्रक राखिएको थियो। यसको पछिल्तिरबाट एउटा मानिस बिस्तारै देखा परयो, उसका खुट्टाहरू, धरमराएका थिए।

यो चालक हो ? होइन यो मानिस अति बूढ़ो छ। टाउको असाधारण प्रकारले लत्रिएको थियो, घामतिर एकोहोरो कालो अनि गहिरो आँखाले, अचम्भ प्रकारले हेरिरहेथ्यो। खाली खुट्टा र रंग उड़ेको लुंगी उसको कम्मरको वरिपरि लापरवाहीसित बेह्रिएको थियो। लामो लौरोले उसले भूँई छामथ्यो। दयनीय अवस्थामा काँपिरहेको दाहिने हातमा उसले माग्ने भाँड़ा समातेको थियो।

“भिखारी!” गोबिन्दनले सुस्तरी भने, “हे भगवान, उ अन्धो रहेछ।”

उसमा अगाध दया जागेर आयो। गोविन्दनले उसको हाफ पेन्टमा, त्यसपछि उसको सेतो सुतीको कमेजको छातीको गोजीमा पैसा खोज्न हात हाल्यो, तर केही भेटाएन। भिखारीलाई दिन उनकोमा केही पैसा पनि थिएन। “हुनसक्छ मेरो स्कूलको झोलामा केही होला” उसले सोच्यो।

किताबहरूमा पैसा खोज्न निहुरन लाग्दा उसले मोटर इंजिनको आवाज सुन्यो। उसले आफ्नो टाउको उठायो अनि खाली ठूतो सड़कतर्फ हेरयो। एउटा ट्रक पूरा बेगसित आँउदैथियो।

“किन यस ट्रकको बेग कम्ति हुँदैन ?” गोबिन्दन छक्क परयो। “यस्तो अप्ठेरो गोलाइमा ड्राइभरले सड़कको किनारमा राखिएको ट्रक वा त्यस ट्रक पछिल्तिरको अन्धो मान्छे देख्न सक्ने छैन।”



"होशियार हिडँ," उसले अन्धो मानिसलाई करायो। "ट्रक सिधै तिमी भए तिरै आउदैछ।" तब उसलाई आफ्ना बोलीको मूर्खताको अनुभव भयो। बूढ़ो मानिस अन्धो थियो। उसले ट्रक देख्न सक्दैनथ्यो। कुन बाटो घुम्नु उसलाई थाहा भएन।

उसले गोबिन्दनलाई हेरयो तर देख्न सकेन। उसको अनुहारमा अलमलिएको भाव देखा पर्‌यो। अनि पहाड़को तल आइरहेको ट्रकको बेग अझ बढ़िरहेको थियो।

"हे भगवान! मैले केही गर्नुपर्छ" गोबिन्दनले उसको झोला र आठौं श्रेणीका ३८ वटा खाताहरू भूइँमा राखे। उसले घरि घरि हात हल्लाउदै स्वर भियान्ज्येल करायो "रोक!! भिखारी! भिखारी!" अनि उ बूढ़ो मानिसतर्फ फर्क्यो जो बाटोका बिचमा असहायः भएर उभिरहेका थिए। उसका कलेटी परेका पहेला ओठँ खुल्ला भएपनि आवाज निस्कन सकेको थिएन। "भाग!" गोविन्दन चिच्यायो, "आफैलाई वचाऊ।" तर उसलाई त्यो बूढ़ो मानिस भाग्दैन भनेर थाहा थियो। कसैले यस घरि अघि सर्नु छ भने, यिनी गोबिन्दननै थिए। तर उसले यसै घड़िनै केही गर्नुपर्छ निमेष पनि नफालि, नत्र भने ढिलो हुनेछ।

गोबिन्दन अघि सरयो। उसको खाली खुट्टाले भूइँ थर्काउदै स्कूलपारी बाटोको किनारमा उ पुग्यो। त्यहाँ उ रोकियो, हात हल्लाए अनि चिच्चाए, "रोक गाड़ी, बिस्तारो चलाऊ।"

आइरहेको गाड़ीको ड्राइभरले टाउको हल्लायो र भन्यो—"हेर यो गाँउले केटो, घर जानलाई गाड़ी रोक्दैछ ! हे भगवान, कस्तो मूर्ख केटो ! वाटो वीचमा नै उभिएको।"

ड्राइभरले हर्न बजायो अनि भएभरको बलले खुट्टाले गाड़ीको ब्रेक थिच्यो। "यदि म चिप्ले त्यहीं नै अन्त हुनेछ" भनेर उसले सोच्यों।

गाड़ीको तेज रफ्तार बिच गोबिन्दन बूढ़ो मानिस भए कहाँ पुग्यो र उसलाई समायो। बूढ़ो मानिस चिच्याए र आफ्नो लौरो र माग्ने भाँड़ा झारी पठायो। तब गोबिन्दन र बूढ़ो मानिस दुवै भूइमा पछारिए।

बूढ़ो मानिसको कुममा आफ्नो हातले बलियोसित कसेर गोबिन्दनले भूइमा लड़ेको सम्पूर्ण भार आफूमा लिए। हावा जहाज जमीनमा झरेर विध्वंस हुँदा जस्तो हुन्छ यस्तै प्रकारले ती दुइ खस्रो सड़कमा उफ्रिएर पछारिए। गोबिन्दनको घुड़ामा मसिना रोड़ाहरू भाँसिए। उसले एक पटक आँखा खोल्यो अनि फेरि बन्द गरयो।

गाड़ी कर्कश आवाज निकालेर गयो। गोबिन्दन र बूढ़ो मानिस केही ऐंचीलेमात्र बाँचे। यसरी कुदेको त्यो गाड़ी बीस गज जस्तो टाड़ोमा गएर रोकियो। "हे भगवान, यो के भइरेहछ," भिखारी करायो।

गोबिन्दनले आफ्नो आँखा जबर्जस्ती खोल्यो अनि भिखारीको भित्र पसेको धमिलो र मृत आँखामा हेरयो। डरले काँप्दै भएता पनि यसलाई दवाएर झिनो आवाजमा भन्यो - "हामी सुरक्षित छौं, बाजे चिन्ता गर्नु पर्दैन।"

बूढ़ो मानिसले खोक्दै भकभकाँउदै भने "मलाई केही थाहा छैन, मेरो लौरो कहाँ छ, मलाई लौरो चाहिन्छ, लौरो छैन भने म केही गर्न सक्तिन।"

गोबिन्दनले भन्यो-"म लौरो ल्याइदिन्छु, आऊ उठ।" उसले बूढ़ो मानिसलाई उठायो अनि कुइनामा समातेर सड़कको किनारमा पुरयायो।

हठात उसको घुँड़ा निकै दुख्न थाल्यो। उसको हात काम्दैथ्यो। गालाबाट रगत चुहिरहेको थियो। गोबिन्दनले उल्टा हातले रगत पुछ्यो अनि भिखारीको लौरो खोज्न अर्को पट्टि फर्कयो।

तब उसले गाड़ीको ड्राइभरलाई रिसाँउदै, झोँक्किएर घुस्सी देखाउँदै, उ तर्फ आइरहेको देख्यो। निधारपट्टि केही ढल्काएको टोपीको मुनिवाट उसका रिसाएका आँखा देखिन्थे। गोबिन्दनले नबुझ्ने भाषामा ड्राइभर गर्जन लाग्यो।

ड्राइभर किन यति साह्रो रिसाएको थियो ? बूढ़ो मानिसलाई बचाउन उसले सक्दो बल गरेको थियो। यो बूढ़ो मानिसको दोष होइन? "होइन, होइन," गोबिन्दन कराए अनि बूढ़ो मानिसलाई बचाउन उ उसको अघि उभियो। "मलाई बुझाउन दिनुहोस।"

ड्राइभरले कुनै ध्यानै दिएन। तीन फड़कोमा उ केटोको छेउमा पुग्यो। उसको कमेजमा समातेर जोड़ले गोबिन्दनलाई झट्कायो।

"महाशय," गोबिन्दनले भन्यो, "दया गरी सुन्नुहोस।" तर उसले कसरी बुझाउने जब उसले गोबिन्दनको भाषै बुझ्दैन ?

इशारा गर्दै गोबिन्दनले टुटेफुटेको अंग्रेजीमा भने–"बूढ़ो मानिस, अन्धा, देख्दैन, गाड़ी देख्दैन।"

ड्राइभरले डरलाग्दो प्रकारले घुस्सी उठायो।

तर घुस्सीले कहिल्यै हिर्काउन पाएन।

अकस्मात ठूलो आवाज हावामा थर्क्यो "उसलाई समात।" मौरीको ओइरो जस्तो कुरूबारापल्ली हाइ स्कूलका बालक बालिकाहरू सड़क तर्फ दौड़े, "समात, उसलाई समात, उसले गोबिन्दनलाई समातेको छ।"

ड्राइभर छक्क परेर वरपर हेरयो, घुस्सी उचाल्दै नबुझ्ने भाषामा केही भन्यो।

"जान देऊ, उसलाई जान देऊ," बालक बालिकाहरू कराए। "गोबिन्दन हामी आँउदैछौ" ब्वाँसोहरूको झूण्डजस्तै स्कूलका बालक बालिकाहरू ड्राइभरमाथि जाइलागे अनि उसलाई प्रायः भूइमा लड़ाइ सकेको थियो। यसै समय एउटा ठूलो आदेशको आवाजले तिनीहरूलाई रोके। "नानीहरू ! यहाँ के हुदैंछ, सड़क छोड़, सड़कदेखि पाखा लाग। हामी कुनै घटना भएको चाँहदैनो, सुन्यौ सड़कदेखि पाखा लाग।"

इच्छा नभइ-नभइ बालक बालिकाहरू रिसले गनगनाँउदै हिंड़े। "डरपोक, उसलाई जेल पठाउनुपर्छ।"

प्रधान अध्यापकले गोबिन्दन र गाड़ीको ड्राइभरलाई सड़कको ढुंगाको किनारमा लगे अनि श्रीमती शित्रा लेहा बूढ़ो मानिसको स्याहारमा लागिन।

"महाशय," गोबिन्दनले हतारसाथ भन्यो, "मलाई बुझाउनु दिनुहोस, मैले जति गरे बूढ़ो मानिसलाई बचाउनलाई गरे, ड्राइभर किन यति रिसाएका छन् म जान्दिन।"

प्रधान अध्यापकले स्नेहपूर्वक आफ्नो हात गोबिन्दनको टाउकोमा राखे। "यहाँ के भयो मैले देखे नानी। म तिमीलाई देखेर अत्यन्तै गर्वित छु। सेकेण्डकोमात्र फरक परेको भए बूढ़ो मानिस मर्ने थियो। अब म ड्राइवरसित कुरा गर्छु।" यति भनेर प्रधान अध्यापक अझै रिसले आकुल भएको ड्राइभरतिर फर्के। उसले नम्रतासित ड्राइभरलाई सोध्यो-"तिमी केही अंग्रेजी बोल्न सक्छौ ?"

"अलिकति, म स्कूलका बालक बालिकाहरूलाई भन्न चाहन्छु।.........."

"एक छिन पर्ख, गोबिन्दनले सड़क पार किन गरयो म बुझाउँछु।"

नानीहरूले प्रधान अध्यापक र गोबिन्दनलाई हेरे, उनीहरूको आखाँ ड्राइभरमाथि थियो। ड्राइभर हठात लज्जित देखिन्थ्यो। उसको आवाजमा कम्पन थियो, केही गुनगुनाउन चाहान्थ्यो, "अहो ! त्यसो पो!" गोबिन्दन पट्टि फर्केर उसको टुटे फुटेको अंग्रेजीमा भन्यो–"म दुखित छु, म अति दुखित ,छु।"

# "म जलिरहेछु !"

पटनाको जेनरल अस्पतालको इन्टेन्सीभ केर युनिटको पलङ्मा निहुरिएको महिलाको आँखावाट अनुहारभरी आँसु झरिरहेको थियो। उसले सेतो पट्टीको बण्डललाई एक टक लाएर हेरी, तिनी उनकी छोरी थिइ। उसले कानमा विस्तारै भनी– "सोनिया, मेरी सोनिया।"

सोनिया सिन्हाले उत्तर दिइन। उ चलमल पनि गरिन। के तिनी अझै जीवित छे ? उसको हृदय गति ठीकै छ?

"डाक्टर के, मेरो नानी बाँच्दैन?" डराएर महिलाले सोधिन्। "डाक्टर, नर्स दया गरी उसलाई बचाइदेऊ," उसले विन्ती चढ़ाइन्।

डाक्टरले महिलाको साना कुममा हात राखेर उसलाई झ्यालतर्फ लगे।

"मलाई विश्वास गर, श्रीमती सिन्हा, हामी सक्दो कोशिश गर्दैछौं।"

"मलाई थाहा छ डाक्टर, म दुःखी छु। तर मैले भर्खरैमात्र मेरो पति गुमाएकीछु। म मेरी छोरी पनि नभएकी सहन गर्न सक्तिन, उसलाई बचाँईदिउ।"

"हामी सक्दो कोशिशमा छौं तर उसलाई आगोले निकै डरलाग्दो र गहिरो पोलेको छ।

धैरे कुरो उसको आफ्नो शक्ति र जिउने संकल्पमा निर्भर गर्छ।"

"तर डाक्टर, उ अस्पतालमा आएको पनि तीन सप्ताह भो।"

"उसको उपचारको निम्ति तीन महीना वा बेसी समय पनि लाग्न सक्छ।"

"हे भगवान !"

"श्रीमती सिन्हा तपाई नरूनु होस्। सोनिया साहसी केटी छ। नत्र भने उसले जो गरी त्यो गर्न सक्ने थिइन।"



सोनिया सिन्हाले आफ्नो भाइ सनत र वहिनी सालिनीले सास फेरेको सुन्थी। सनतले भर्खरै बोल्न सिकेको थियो अनि पाँच वर्षको सालिनी सुतेकी अवस्थामा अत्यन्तै मनमोहक देखिन्थी। उसको फिरेल भएको सुतीको राती लाउने वस्त्माथि सरेकोले उसको ढाड खुल्ला थियो जो छिटो-छिटो चलिरहेको पंखा पट्टि परेको थियो।

सोनियाले विचारी–"म बरू छोपी दिन्छु।" अनि हठात तिनीहरू नभएको शुन्यताको अनुभव गरिन् किनभने सोनिया उसका बाजे बज्यूसित पटनामा वस्न थालेकी छे। त्यहाँ तिनी सन्त जोसेफ कन्भेन्टमा जान्छे। उसलाई कन्भेन्ट र शिक्षकहरू मनपर्थ्यो तर उनको इच्छा हुन्थ्यो विहारको यसै सोना शहर अराकमा पढ्ने जहाँ उसको पिता सरकारी अस्पतालमा शिशु विशेषज्ञको काम गर्थे। तर उसको पिताले भनेका थिए-"म मेरो नानीहरूलाई सक्दो उचित शिक्षा दिलाउने पक्षमा छु जसले उनीहरूलाई जीवनका सबै पक्षहरू देखाउनेछन्।"

सोनिया सिन्हाले बाबुले भनेका यस कुरो के हो बुझ्न सकीन। तर उसलाई थाहा थियो कि आफ्ना आमा बाबुले उसैको हितलाई मध्य नजरमा राख्थे। त्यसैले उसले अस्वीकार गरिन र मेहनत गरेर पढिन्। उ छुट्टिको समयमा अनि हिज जस्तै विशेष दिनहरूमा घरमा आउँथी। हिज उसको एग्धारौ जन्मदिन थियो। कति अचम्भलाग्दो दिन थियो हिज ! उसका जम्मै पुराना साथीहरू, काका-मामा, छेमा-फुपू र भाइ-बहिनीहरू सबै भेला भएका थिए। उसले नया जामा लगाएकी थिइ-सेतो लेस भएको हल्का निलो अनि सेतो रिबिनले उसको कालो केश बाँधेर पछिल्तिर लगेको थियो। जन्मदिनको चोकलेट केकमाथि राखिएका एघारवटा मम बत्तिको उज्यालोमा उसका ठूला ठूला खैरो आँखा चम्केका थिए। यो जन्म दिन कति रमाइलो थियो ? एघार वर्ष पुग्न अनि आमा बाबु र साना भाइ बैनी सित घरमा

हुनु कति आनन्दमय ।

सालिनी चलमलाइ । सोनिया झसङ्ग् भइ । पलङ्बाट विस्तार झरी, कमरा पार गरी र उसको वहिनीको राती लाउने वस्त्र तल झारिदिइन् ।

खाना कमरामा उसका बाबु आमाहरू रात्री भोजन खाँदै कुरा गर्दै थिए ।

"पकाउने गेस सिलिण्डरको द्वार यंत्र (भल्ब) के भएको छ आनन्द, ? यो एकदमै कसिएको छ, मैले खोल्न सकिन ।" "खाना खाइ सकेपछि म हेर्छु ।"

"तपाईले यसको मरम्मत गर्न सक्नु हुन्छ, मैले आशा गरेकोछु । गर्मीमा मट्टीतेलको स्टोभमा पकाउनु असम्भव छ । पानी अझ उम्लिन्दै रहेछ, यसलाई निकाल्नु पर्छ ।"

सोनियालाई पनि बाबु आमा भए कहाँ जान मनलाग्यो तर यति राती उ उठेको उसको आमा बाबुलाई मनपर्दैन भन्ने सम्झी । त्यसैले उ पलङमा सुत्न गई र उसको जन्मदिनको छवटा उपहार मात्रै सम्झना गर्दा गर्दै मस्त निन्द्रामा परी ।



"आया" - - - - -

सोनिया आफ्नो पलङ्मा जुरूक्क उठेर बसी ।

केही करायो ? सनत ? सालिनी ? उनीहरू सुतिरहेको अनुहारमा सोनियाले हेरी अनि ढुक्क मानी । ओ! उसले निश्चय पनि नराम्रो सपना देखेको हुनुपर्छ । उसको हृदयको धड्कन अझ तीब्र थियो । उ ओछयानमा जान तर्खर गर्दै थिई जब उसले उसकी आमा चिच्याएको सुनी ।

"फर्केर आऊ आनन्द ! कुकरको द्वार यंत्र त्यहीं छोड़ । ग्यासमा आगो लागेकोछ, तिमी जल्छौ आनन्द ।"

"होइन माया, यसलाई बन्द गर्नै पर्छ ।" सोनियाले आफ्नो बाबुको विकृत आवाज सुनी ।

"आगो! वाहिर निस्क आनन्द, वाहिरनिस्क ।"

अकस्मात उ बेदनाले करायो । "भाग माया ! आफैलाई बचाऊ, नानीहरू हेर, हे भगवान, कति गर्मी !"

सोनिया पलङ्वाट उफ्री । "वाबु, बाबु" उ एकै फड्कैमा खाना कमरामा पुगी ।

केही फूट पर भान्सा घरमा उसले आमालाई देखी, उ हातको औंलाका हड्डीहरू ओंठमा लगाएर काँपी रहेकी थिइ । उ आफ्नो लोग्नेलाई समात्न हठात अघि सरिन् जो भान्सा घरबाट लरबरिन्दै निस्के अनि आफ्नो पत्नीको हातमा लड़े । अग्लो, राम्रो शारीरिक गठन भएको उसको पतिको शरीर थाम्न नसकी उ झण्डै लड़ी ।

भान्सा घरबाट आएको आगोको मुस्लोले सोनियाको अुनहारलाई झवाप्प छोप्यो । ग्यास सिलिण्डर जलिरहेको थियो । कुनै पनि समय यो विस्फोट हुनसकथ्यो । "हावा, हावा हामीलाई हावा चाहिन्छ, आमा तिमी त्यहाँवाट हट," सोनिया कराई । तर उसकी आमाले रूनुवाहेक केही गर्न सकिन, "आनन्द! आनन्द!!" उ बेहोस भई ।

सोनिया उफ्रेर उसको बाबुलाई कुममा समात्न पुगी । उसको नाखमा पोलेको मासुको घिनलाग्दो गन्ध आयो । शरीर कस्तो भयो । उसले आफ्नो बाबुलाई हेरी अनि डरले काम्न थाली । उसको बाबुको अनुहारमा जलेकोले ठूलो फोका उठेको थियो अनि घिच्रोको मासु आगोजस्तै रातो भएको थियो । "पापा"

"आमा, तान्नुहोस आमा" अनि भान्सा घर र खाना कमरादेखि उसले आफ्नो बाबुलाई घिस्स्याउन थाली । "हामी वाहिर निस्कौं !"

सोनिया र उसकी आमाको सास नभएको जस्तो धड़कन बढ़न थल्यो ।

तातो हावाले आँखा देख्न नसक्ने बनायो र उनीहरूको फोक्सोमा चोट परयो । उनीहरूले त्यो निश्चल शरीरलाई आफ्नो ढ़ाडमा बोकेर मूल ढोका, सिढ़ी अनि गाड़ीको बाटो हुँदै तल आँगनमा निकाले । अनि उनीहरू झारमा वेहोश भए ।

"श्रीमती सिन्हा ! श्रीमती सिन्हा ! के भयो?"

सोनियाले आफ्नो टाउको उठाइ अनि उसको दयालु छिमेकी तर्फ हेरी ।

"हे भगवान!" बूढ़ा बूढ़ी छेउमा गएर विस्तारै भने डा० सिन्हालाई के भयो?

"ग्यास ! हे भगवान, मेरी पति," श्रीमती सिन्हाले सास रोकी रोकी भनी ।

"आनन्द ! आनन्द" भन्दै आफ्नो प्राणहीन पतिको शरीरमा लड़ी ।

छिमेकी बूढ़ीले भनी–"हामीले सहायता माग्नैपर्छ ।"

"विनोद, जाऊ छिटो, एम्बुलेन्स ल्याऊ म यहाँ वस्छु ।" बूढ़ो मानिस दगुरे ।

बूढ़ीले श्रीमती सिन्हाको ढाड़ सुम्सुम्याउदै विस्तारै भनी-"दया गरी तिमी निश्चिन्त बस, चाँड़ै सहायता आइपुग्छ।"

सोनियालाई हठात सालिनी र सनतको याद आयो। "हे भगवान," उ सुस्तरी बोली। उसको अनुहारवाट रंग उड़ेको थियो।

सोनिया हठात उठी र गाड़ीको बाटो भएर गई "सालिनी, सनद उनीहरू घरभित्र छन् भन्न लागी"

"पर्ख सोनिया" भनेर छिमेकी बूढ़ीले भन्दा नभन्दा सोनिया सामुन्नेको ढोकामा पुगेर ढोका खोली सकेकी थिइ।

फलामको हातले जस्तो घरभित्रको गर्मीले उसको अनुहारमा झ्वाप्प हिर्कायो। उ पस्न नसकी पछि सरिन्। सिलिण्डर भित्रको आगोले कम्ती हावा खेल्ने त्योसानो भान्सा घर आगोको भट्टी जस्तो भएको थियो। सबै कुरो जलिरहेको थियो, खरानी भएको थियो, सबै कुरो पग्लिरहेको थियो।

हाँड़ी र फूटने भाँड़ाहरूका थाक कुनै आवाज नगरी भूइमा झरे। झयालका फलामहरू ठूलो आवाज गरेर भाड़ाँधुने जगहमा झरे। यसैले सहायताका लागि कराइएका निराशाका आवाजहरू केही सुनिएन।

सालिनी, सनत ! हे भगवान, उनीहरू जल्दैछन्।

ठूलो सास फोक्सोमा रोकेर सोनियाले दैलो खोली। बैठक कमरावाट कुदेर तिनी एकै छिनमा खाना कमरामा पुगी।

उसको आँखाले देखेको दृश्य विभत्स थियो।

टेबल चौकीहरू जम्मै भाँचिएर यत्रतत्र छरिएका थिए। छेउका दैलोहरू खोलिएका थिए अनि छिड़किनीमा झुण्डिएका थिए, ताकका जिनिसहरू यत्रतत्र छरिएका अनि भूईमा खसेर भाँचिएका थिए।

गर्मीले उसको अनुहार, पाखुरा, छात्ती र खुट्टामा पोल्यो। उसको कन्सिरीमा घुमेको केश त्यहीं हराएको थियो। उसको शरीरको छाला डड़ेको दुर्गन्धले उ भयभित भएर उसलाई रिङटा लागेको थियो। "छिटो फर्किहाल, ढ़िलो नगर" उसको मनभित्र बाट आवाज आयो। तर केही कुरोले उसको मगज झक्झकायो–"तिम्रो भाइ बचाऊ, तिम्रो वहिनी वचाऊ।"

सोनिया लरबरिन्दै अघि सरी। सालिनी रोइरहेकी पलङमा सोनिया प्रायः लड़िसकेकी थिइ। सालिनीले आफ्नो भाइलाई छातीमा टँसाएकी थिई, पसिनैसरीको केशले उसको रातो अनुहार ढाकेकी थिई।

"सोनिया, औ सोनिया" बेदनाग्रस्त चित्कारसित सालिनीले दिदीको पाखुरामा आफूलाई फँयाक़िन। सोनियाले उसलाई समाती अनि तर्सेर हेरी। उसलाई केही विश्वास दिलाउने इच्छा थियो तर उसको शोर घांटीमा सुकेको थियो।

स्याँ स्याँ गर्दै सोनियाले उसकी वहिनीलाई आफ्नो दाहिने कम्मरमा राखेर, सानो सनतलाई छातीमा टसाँई। "सोनिया! आमा! बाबु!" सानो भाई करायो।

सोनियाले डरले कामिरहेका सालिनी र सनतलाई प्यारले सुम्सुम्याए र मुस्कुराउन खोजी।

त्यस समय उसले आफ्नो हात देखी। के यो हात हो वा काँचो मासुको थुप्रो र फोकै फोकाहरू। त्यस साँझ दोस्रो पटक उसले आफ्नो खुट्टाले काम नगरेको अनुभव गरी। उ भयभीत भई।

"म यहाँवाट निस्कन सक्तिन, हामी सबै मर्छौं," । उसले यही सोची। तर तिनको आत्माले भन्यो– "सोनिया हिड़, तिमी ठीक हुनेछौ।"

सोनिया अघिसरी।

शुरूमा विस्तारसित काठको खुट्टा भए जस्तै लरबराँउदै वहिनी र भाइको भार बोकेर सोनिया अघि सरी। त्यसपछि तिनी दौड़ी र कोठादेखि बाहिर निस्की। पछिल्तिर तिनले ताकहरू भूईमा लड़ेको आवाज सुनी। सास रोकेकोले फोक्सो फुट्न आँटेको थियो अनि खुट्टा अघि नसरेकोले सामुन्नेको दैलोसम्म उ पुग्न सकिन।

उसको आत्माले भन्यो–"तिमी सक्छौ सोनिया, तिमी सक्छौ।" सोनिया दाँत किटेर अघि सरी।

अहिले उ दैलोमा पुगी अनि दैलो खोली। शिर नउठाइकन उ हुत्तिएर तल सिँड़ीतिर झरी। अनि उ वेदनाले कराई–"आया- - -आमा, म जलिरेहछु, म जलिरहेछु।"

उसको खुट्टाले काम गर्न छोड़यो र उ अन्धकारमय शुन्यतामा डुबी।



अस्पतालको पलङ्मा कालो आँखा भएकी केटीलाई डाक्टरले विस्तारै भने-"तिमी नबोल। तिमी सन्चै छौ।"

"मेरा बाबु आमा, सालिनी र सनत सबै कहाँ छन्?"

"तिम्रा आमा भाइ र वहिनी सबै कुशल छन्।"

"तर म यहाँ किन छु? यी सब पट्टीहरू किन? यसले मलाई दुख्छ अनि मेरो अनुहार - - - ।"

डाक्टरले सहानुभूतिपूर्वक भन्यो–"तिमी साह्रै विमारी थियौ। तिम्रो अनुहार, घिच्रो अनि हातहरू नराम्रो प्रकारले जलेको थियो। तर भित्र तिमी त्यही छौ जस्तो थियौ। तिमी भाइ र वहिनी बचाउने आँटिलो र बुद्धिमानी केटी हौ। अनुहारका केही दागहरू देखी तिमी विचलित हुने छैनौ मलाई थाहा छ। सोनिया तिमी के भन्छौ?"

सोनियाले आँखा भरी आँसु पारेर उसलाई हेरी। धेरै बेरपछि उसले सुस्तरी भनी– "होइन म विचलित हुँदिन, अहँ हुँदिन।"

# उनीहरूको वीचबाट मृत्यु हिड़्यो

शत्रुघनको गहिरो खैरो आँखा उत्तेजित भएर चम्क्यो। हातले ताली लगायो अनि खुशीले भन्यो—"कति राम्रो, मलाई खेल्न मनपर्छ। एक दिन म महाभारतको अर्जुन हुनेछु।" अनि छाती उचाल्दै उ करायो—"कृष्ण निविर्कार, मेरो रथ त्यहाँ लैजाऊ जहाँ योद्धाहरू, युद्धका बहादुरहरूले उनीहरूको दुश्मनको सामना गर्छन्।"

आइमाइहरू आफ्ना साड़ीका आढ़मा खित्का छोड़ी हाँसे अनि बालक बालिकाहरू कराइ कराइ हाँसे। अनि उनीहरूले शत्रुघनको आनन्दसित नकल गरे—"कृष्णा निर्विकार, मेरो रथ लैजाऊ............।"

केही वर्ष अघि आफ्नो काकासित बस्न आएको बाह्र वर्षको यो टुहुरो केटोलाई सबैले माया गर्थे। केलाबारी गाउँका प्रत्येकले यो दुवलो केटोलाई मन पराउँथे, जो सँधै अरूलाई सघाउन तथा हाँस खेल गनि अघि सर्थे।

आइमाइहरूमा सबै भन्दा ठूली चितन देवीले अझै पनि मन मनमा हाँस्दै भनिन्—"ठीक छ शत्रुघन, हामी तिमीलाई साथ लान्छौ, हामी साँझ पर्दानै हिड़िहाल्छौं" शत्रुघन उत्तेजित भएर उफ्रयो अनि तल गाउँमा भएको आफ्नो काकाको घर तर्फ कुदयो।

ठूलो आवाजले गाँउदै, सुसिलो मार्दै शत्रुघनले नुहायो। भर्खरै धुएको सुतीको कमेज र हाफ पेन्ट लगाएर, शत्रुघन अँध्यारो धुवां सरीको कमरामा ताँबाको खाने

थालको अघि बस्यो र छिटो छिटो खानु थाल्यो।

"विस्तारो खा, शत्रुघन छोरो विस्तारो।"

शत्रुघनलाई विस्तारो खानु साह्रो परयो अनि मनपरेको मटर र भात विस्तारो खानु त झन असम्भव थियो। अन्तमा उसले ओंठ र औलाँहरू चाटयो अनि – "कति स्वादिष्ट भोजन छ्यामा, मैले धेरै खाएछु।"

"सँधै जस्तै" छ्यामा मुस्कुराई।

"तर आज भातामा महाभारत हेर्नु जानु परेकोले यति भोजन त मलाई आवश्यकता थियो। हामी विहान फर्कन्छौ। चितन देवीले हामीलाई लाँदैछे।"

"ठीक छ, शत्रुघन तर होशियार रहनु, राम्ररी व्यवहार गर्नु।"

उपद्रव प्रकारले शत्रुघनले सँधै जस्तै हाँस्दै भन्यो-"म त्यसै गर्छु छ्यामा।" अनि उ हिड़ँयो। छ्यामाले स्नेहपूर्वक आफ्नो टाउको हल्लाइ अनि ठूलो श्वास फेरी।

चार आइमाइहरू र छ जना बालक बालिकाहरू हिड़ँदा घाम डुब्न लागेको थियो। नाँगो समतलमा भएको साँगुरो बाटोको दुवै पट्टि पोथ्राहरूमा अँध्यारो छाइसकेको थियो। नभेम्बर महीनाको चिसो हावाले उनीहरूको नाक चिमोटयो।

"चिसो छ यहाँ"-चितन देवीले भनी अनि अरू आइमाइहरूले आफ्ना सालहरू कुममा कस्दै मुन्टो हल्लाइन्।

शत्रुघनले सानो निर्मलको हात समात्यो अनि विस्तारै सुसेली मारयो।

भिलाइवाट आएको रेल लाइनमा पुगे-पछि चितन देवीले भनी-"हामी यो रेलको पटरी भएर जाऔँ। फूलझर नाला पार गर्न हामीलाई सुविस्ता पर्छ।"

"तर के यो निरापद छ?" शत्रुघनले सोध्यो। "सड़क भन्दा निरापद छ, यो समयमा कुनै रेल चल्दैन, छिटो आऊ, नत्र ढिलो हुन्छ।"

शुत्रुघनले आइमाइहरू र बालक वालिकाहरूलाई रेलको पटरीमा चढ़न सघायो। निर्मलको हात बलियो समातेर, उ बाटो देखाउनपट्टि लाग्यो। रात बाक्लो कम्बल झै अँध्यारो भयो। बाटो हेर्नुभन्दा बेसी उनीहरूलाई अड़कल गर्नु पर्थ्यो। तर शत्रुघनले एक पटक ठीक बाटो पत्तो लगाएपछि रेलको पटरीमा हिड़न सजिलो भयो।

"विस्तारो हिड़ आमा, म त्यति छिटो हिड्न सक्तिन"- पछिवाट एक जना केटो करायो। अनि चितन देवीको पाखुरामा भएको सानी बाबली रून थाली। चितन देवीले सुम्सुम्याउदै भनी-"नरोऊ हामी चाड़ैं त्यहाँ पुग्नेछौ। तिमीहरूलाई शकुन्तलाको कथा थाहा छ ?"

"थाहा छ," शत्रुघनले जिस्काउदै भन्यो, "मैले प्रायः सात पल्ट यो कथा सुनेकोछु"।

"ठीक छ" चितन देवीले व्यग्र नभइ भनी-"जसले सुनेको छैन अनि जसले सय पल्ट भन्दा बेसी सुनेकोछ उनीहरूलाई शकुन्तालाको कथा भन्छु।"

शत्रुघन दिक्क लागेर छटपटायो। तर उसले समय र स्थान विर्सेर राजा अनि शकुन्तलाको दुःख र सुखको कथा सुनी बस्यो।

चितन देवीको आवाज वाहेक सबै चुपचाप थिए। अकस्मात शत्रुघन रोकिएर भने-"रेलको पटरी केही थर्किएको जस्तो लागेन ?" निस्पट अँध्यारोमा उसले आँखा उघारेर अघि हेर्ने कोशिश गर्‍यो अनि फर्केर भन्यो–"हेर रेल त आइरहेको छैन ? रेल, रेल !!"

भयभित भएर बालक बालिकाहरू चिच्याए। चितन देवीले हकार्दै भनी "कस्तो मूर्ख। यो समय यो बाटो भएर अहिलेसम्म कुनै रेल आएको छैन न आउनेनै छ। शत्रुघन तिमी आफू ठीक वस्नु, नानीहरूलाई डर नदेखाऊ अनि तिमी सँधै विचमा नबोल। अनि म कहाँ पुगेकी थिए, अँ शकुन्तला रोइ।"

शत्रुघनले आफ्नो काँध खुम्चायो। चितन देवीले भनेकी कुरो ठीकै पनि हुनसक्छ। उसले पनि आठ बजे साँझ यो वाटो कहिले रेल आएको सुनेको थिएन।

केही वेरपछि उनीहरू फूलझर नालामाथिको साँगुरो पूलमा पुगे। हठात हावाको एक झोंका आएर पूलका फलामका तारहरू हल्लाए। हावाले सबैका केश हल्लाएर उनिहरूको अनुहारमा चिसा औलाँहरूले चिथोरेको जस्तो गरे।

चितन देवी कराइ–"तिमीहरू सबैं सगै बस।" तर उसको बोली हावाले उड़ाएर लग्यो। सानो निर्मलले काम्दै शत्रुघनको हात बलियो सित समात्यो।

"छिटो गर, छिटो गर", आइमाइहरूले ढिपी गरीन्। उनीहरूको खुट्टा एक आवाजमा हिड़ी रहेको थियो। चितन देवीले ससानाहरूलाई पूलको माथि जम्मा गरी। हत्तारमा उनीहरूले शत्रुघनलाई अघि लगाएर हिड़ें। उनीहरू पूलको विचमा पुगेको थियो। फेरि रेलको लाइन थर्कियो।

"पूल हल्लिन्दैछ," एक जना आइमाइ कराई।

डरले त्रस्त भएर एकजना केटी कराई–"आमा, पूल भाँचिन्दैछ।"

"मूर्ख," चितन देवी कराई। "यो हावाको झोंका हो, छिटो हिड़, छिटो।"

शत्रुघनले ध्यानसंग सुन्यो। उनीहरूको पछि रेल आउँदै गरेको आवाज होइन त्यो, कि हाम्रै अघि रेल आइपुग्यो ? एक चोटी फेरि शत्रुघनले अँध्यारोमा नियालेर हेर्ने कोशिश गरयो तर व्यर्थ भयो। हावाको अर्को झोकाँले उसको अनुहार लुछेर लग्यो।

केही आँउदैछ, शत्रुघनले हावामा अनुमान लगायो। रात्रीको पखेटामा चढ़ेर केही कुरो आउँदैछ। यो दौड़न्दैछ, रेल!रेल!

"निर्मल, चितन देवी, सबै भाग, भाग"

तर भाग्ने समय नै कहाँ। उसलाई अघिनै थाहा भयो, पचास गज़भन्दा टाढ़ोमा छैन वाफले चल्ने रेलको इजिंन। यसले उनीहरूलाई कुल्चेरनै छोड़नेछ। इंजिन हो उसलाई थाहा भइसकेकोछ तर देख्न सकेको थिएन । यो बत्ति बिनाको भूत रेल थियो।

"फाल मार, सबै जना फाल मार।"

निर्मललाई उसको पाखुरा उठाएर शत्रुघनले रेलको पटरीदेखि फाल मारयो अनि पूलमा हल्लिरहेको फलामको तारमा टाँसियो। उसले दाहिने पट्टि हेरयो अनि वाफले चलिरहेको इन्जिनको विशाल कालो छाया अँध्यारोमा ठूलो आवाजमा आएको देख्यो। छुस छुस गर्दै, धुवाँ फ्याँकदै इन्जिन उनीहरू भए तिर गड़गड़ाउदै आए।

एक छिन, शत्रुघनले चितन देवीको ठूलो आवाजको चित्कार सुनेको जस्तो लाग्यो तर इंजिनको भयंकर आवाजले सबै शुन्यतामा हराए।

"हे भगवान, हामीलाई दया गर।" शत्रुघन चिसो फलामको तारमा टाँसिएर वसेको थियो। उसले समाति राखेको काम्दै गरेकी केटी प्रायः चेप्टी सकेकी थिइ। इन्जिनको बलियो झोंकाले उसलाई झण्डै उछिटायो।

भूत जस्तो एक्कासी आएको यो एक्लो इन्जिन, हरायो। पछिवाट छाएको निष्तब्धता बड़ो डरलाग्दो थियो। किन कसैको पनि आवाज आउँदैन ?

निर्मल करायो "आमा, आमा।" कुनै उत्तर थिएन।

चितन देवीले इन्जिन, ड्राइभर अनि दुवैलाई सराप्नेछ भन्ने शत्रुघनले आशा गरेको थियो। तर यो मौनतालाई भंग गरेर कुनै आवाज निस्केन। रात चकमन्न थियो, अति भीषण शान्त थियो।

"चितनदेवी, बाबली, सुक्कु बाई !" शत्रुघनले एक एक गर्दै नाम बोलायो तर कसैको उत्तर आएन। उसको मनमा डर पस्यो। के भयो ? यिनीहरू सबै कहाँ छन्?

अकस्मात उसले कोही रोएको आवाज सुन्यो, व्यथापूर्ण चित्कार!

"बाबली, औ बाबली", उ अन्धकारमा करायो। "तिमी कहाँ छौ ? शत्रुघनको छातीमा आफ्नो अनुहार छोपेर निर्मल रोयो-म घर फर्कन्छु।"

"तिमी जान्छौ निर्मल।" शत्रुघनले स्वाभाविक स्वरमा-भन्यो। "तर पर्ख यहाँ के भएकोछ हामी हेरौं।" केटीलाई कम्मरमा बोकेर शत्रुघन रेलको पटरीमा फर्के। रेलको पटरीमा सानी केटी कष्टले चित्कार गरिरहेकी देखेर डरले अब उसको आँखा खोलियो।

"बाबली बाबली," उसले विस्तारै बोलायो।

"हे भगवान," शत्रुघनलाई आफ्नो नांगो खुट्टाले केही चिजसित ठोक्किए जस्तो लाग्यो जो पल्टन्दै गए। केही क्षणसम्म उसको खुट्टा उसको मुनि बाँधिएको जस्तो लाग्यो। होइन, उसले केही गर्नै पर्छ। उसले बालक बालिकाहरूलाई बचाउँनुपर्छ। उ मुनि निहुरेर रेलका पटरीहरू र रोड़ाहरूमा खोज्यो अनि उसको हातले एउटा नानीको शरीर भेटयो। नानीले खुट्टाहरू व्यथाले फ्याकि रहेको थियो। उसले बिस्तारै उठायो र उसको काधँमा राख्यो। "बाबली ! बावली !" उसले सुम्सुम्याँउदै बोलायो। तर जब उसको ढाड़ आफ्ना औलाहरूले छामे उसले रगत चुहिरहेको प्वाल भेटे।

उसलाई रिङाटा चल्यो, तर आफैलाई सम्हाले। उसलाई केही समय पनि खेरो नफाली तत्कालै हिड्नु थियो, तर सकेन। त्यो अन्धकारमा "चितन देवी, चितन देवी, सुक्कु बाई" भन्दै एक पटक फेरि शत्रुघ्न कराए।

हावाले उनीहरूको नाम परसम्म उड़ाएर लगे। त्यसको केही उत्तर थिएन। काँपिको स्वरमा शत्रुघनले भने–"आऊ निर्मल, मेरो हात समात। हामीलाई सहायता चाहिएको छ।" तर उसलाई सहायता निकै ढिलो आउँछ भन्ने कुरो थाहा थियो।

त्यहाँवाट फर्कियो र छेउको गाँउ मुंग्री तर्फ जानलाई रात्रीको लामो यात्रा शुरू गरयो। बाटोको खोजीमा उसले रेलको लाइन छोड़े। निर्मलाको हात बलियो समाति तथा चोट लागेको नानीलाई आफ्नो छातीमा राखेर अन्धकारमा उसले छामछुम गर्दै अघि बढ़े। रूखका हाँगाहरूले उसको अनुहारमा टक्कर लाग्यो। उ निर्मलसितै भूईंमा लड़्यो।



आफै उठेर, डराएकी केटीलाई पनि उठाँउदै लरबरियो–"यो केही पनि होइन," शुत्रघनले भन्यो, "यो केही पनि होइन निर्मल।"

लाटकोसेरोको विचित्रको आवाज सुनेर शत्रुघन थरथरायो। रात त्यति अँध्यारो र डरलाग्दो हुन्छ भनेर उसलाई थाहा थिएन।

नरम र कालो पखेटा भएको केही कुरोले उसलाई पार गरेर गयो। उ तर्सेर भन्यो "चमेरा हो," उसले सोच्यो खाली "एउटा चमेरा।" अग्ला घासहरूको सरयाड. सुरूड.को आवाजले उ अचम्भित भएको थियो। उ रोकियो अनि स्यालको हाउ हाउ र ब्वाँसोको स्वर जस्ता रात्रीका उदेकलाग्दा आवाजहरू सुने। वरिपरिका प्रत्येक ठाउँमानै भय र त्रास देखिन्थ्यो। विषालु साँपहरू, डरलाग्दा विच्छुहरू, जंगली कुकुर, ब्वासो र बाघहरू, यी जम्मै सोचाइहरूले आफ्नो संकल्पमा शिथिलता नआओस भनेर उसले विर्सने कोशिश गरे। उ मुंग्री पुग्नु थियो।

अनि उ पुग्यो। थकाइले हैरान भएर उ प्रायः लड़न आँटिको थियो र पहिलो भेटेको घरमा नै ढकढकाए। "सहायता गर, डाक्टर, नानी मर्न आँटिकोछ।"

मिनट भरमै गाउँका जम्मै मानिसहरू उसको वरिपरि थुप्रे। "के भयो, केटो के भयो ?"

"उ रगतले छोपिएको छ ! तिमीलाई चोट लागेको छ?"

"म होइन, बालक, दया गरी उसलाई बचाऊ। हामी दश जना थियौ, अहिले तीन जना मात्रै छौं। के भो, मलाई थाहा छैन, रगतै रगत थियो त्यहाँ हुन् सक्छ सबै.......... ।"

उसको खुट्टाले काम गर्न छोड़े अनि गाउँका मुखियाको पाखुरामा लड़े। पानीको छाल जस्तो उ बेहोस भयो।



मध्य प्रदेशको रायगढ़ तर्फ, भएको रेलको लाइनतर्फ मुंग्री गाँउका मानिसहरू चुपचापसित हिड़न लागे। कोही बोलेन। सानो केटोका नबुझ्ने कुराहरू उनीहरूको

कानमा अझै गुजिंरहेको थियो।

गाउँका मानिसहरू जब फूलझड़ पूलमा पुगे, उनीहरूले बत्ती उठाएर हेरे। दृश्य देखेर उनीहरूको रगतनै चिसो भएर आयो। रेलको लाइन र पटरी बिच रक्ताम्मे देखे जहाँ सात जनाको बेरूप भएको लासका अवशेषहरू देखिए।

गाँउलेहरूले बत्ति तल झारे र अर्को पट्टि फर्के।

"यो पृथ्वीमा यस्तो पनि हुनसक्छ।" "गाउँका मुखियाले भने। "तिमीले रेलको सिटी सुनेनौ नानी ? ड्राइभरले सिटी बजाएन न त्यहाँ कुनै बत्तिनै थियो। इन्जिनको बत्ति खराब भएको थियो होला।"

"एउटा इन्जिन त्यो पनि बिग्रेको बत्तिसित" त्यो मानिसले आफैलाई प्रश्न गर्‍यो। "सानो तकनिकी भूलले गर्दा यत्रो आपद।"

"यो दुइ स्टेसनको वीचमा हिड़ने सटल रेल हुनपर्छ। तर यो अन्धो राक्षस जस्तो थियो।"

"इन्जिनको आवाज पनि सुनेनौ? तिमीले सुन्नु पर्ने ?"

"हो, मैले सुने तर अरूले सुनेनन्।" उनीहरूले सुनेको भए पनि अति ढिलो भइसकेको थियो। शत्रुघनले आफ्नो हातले मुख छोप्यो।

"नरूअ नानी, यो तिम्रो दोष होइन। तिमीले सकभर कोशिश गरयौ। तिमीले हामीले गर्न सक्ने भन्दा बेसी गरयौ।" देब्रेपट्टिका मानिसतर्फ फर्केर गाँउको मुखियाले भने-"केटोलाई घर लैजाऊ बहादुर लाल। जाऊ नानी, उसित जाऊ भगवान तिम्रो साथमा छ।"

शत्रुघन अनि बहादुर लाल हिड़े। मृत्यु आफै विचमा हिड़ी रहेको जस्तो उनीहरूले अनुभव गरे र चुपचापसित मुंग्री फर्के।

## "दयाकी सागर मेरी, हामीलाई बचाऊ !"

म त्यो शनिवार २२ फरवरी, १९६५ कहिले बिर्सने छैन, कहिले पनि। आज प्रायः पन्ध्र वर्षपछि पनि म सुन्न सक्छु मर्दै गर्नेहरूको निराश आवाज, नानीहरूको असहाय चित्कार, ओठँका अन्तिम प्रार्थनाहरू खोसेर लैजाने हावाको झोंका, "मेरी, ईश्वरकी आमा, हामीमाथि दया राख।"

आमाको डरले कामिरहेको आखाँहरू सधै सम्झि-रहन्छु जब उसले मलाई उसको पाखुरामा तानेर नानी जस्तो झुलाएकी थिइ। "फेलिसिटास, छोरी, ईश्वरलाई आर्शिवाद छ जसले मेरी छोरी फेरि एक पट्क फर्काएर मलाई दिए। अभिवादन छ मेरी, दयाकी सागर तिमीलाई जसले मेरी प्रार्थना सुनिदियो। "त्यसपछि यी हृदय विदारक क्षणहरूमा मैले जो गर्न खोजेकी थिएँ, सो गरें।" मेरो अनुहार आमाको कुममा लुकाएर म रोएँ। मेरी आमाले घुँड़ा टेकी र तेलले मेरो खुट्टा धोई। उड़िस्साको झुनमीरमा मृत्युवाट उम्केर आउनेलाई यस्तै गर्ने प्रथा थियो।



"दगुर फेलिसिटस," आमाले भनी र मेरो निधारमा म्वाई खाइ। "तिमीलाई थाहा छ, मलाई आउन मन पर्छ तर म ससाना नानीहरूलाई छोड़न सक्तिन, अनि खेतमा बाबुलाई मेरो सहायता चाहिन्छ। तिमी जाऊ नानी, अनि ईश्वरको नै प्रेमको आड़मा तिमीलाई आर्शीबाद दिऊन् अनि रक्षा गरून्।"

"बिदा पाँऊ आमा।" आमा हामीसित नदीको पाँच माइल तल भएको केसरल गाउँमा आउन सकेकी भए हुन्थ्यो। तर आज ईश्वरलाई धन्यवाद दिन्छु तिनी आइन।

"कस्तो छौ फेलिसी, किन तिमीहरू सबै आज तयार भएकी छौ ?" परिचित आवाजमा कसैले पछिल्तिरबाट भन्यो।

यो फिलोमिना वाहेक अरू कोहि हुनसक्तैन। मैले उसलाई नचिनेको जस्तो गर्न खोजें। तर मेरी प्रिय साथी फिलोलाई पन्साउन गाहारोमात्र होइन, असम्भव पनि थियो। "फेलिसी," उ कराइ अनि मलाई अंगालो मार्न आइ। "तिमी यो सुन्तले रंगको साड़ीमा सुन्दरी देखिन्दैछौ। त्यस्तै चोली र कानको कुण्डल, के यो साँच्चै चाँदिको हो ?" उसले खुशीसित ख्याल ख्यालमा तानी। मैले रिसाएको जस्तो गरें उसका औलाँका टुप्पामा हिर्काएँ। "फिलो, तिमी अब नानी छैनौ, सोह्र वर्ष पुगिसकेकी छौ-त्यस्तै व्यवहार गर।" तर हामी सोह्र वर्षकी केटी जस्तो नभएर चिच्यायौं-"हामीलाई नावले छोड्छ, कुद।"

साड़ी माथि तानेर किनारतर्फ दगुरयौं। हाम्रा केशको चुल्ठो तलमाथि उफ्रन्दै थिए, हाम्रा फूटने चुराहरू खुशियालीमा छिर्लिङ. छिर्लिङ. बज्थ्यो किनारबाट निस्कि सकेको लामो खियाँउदै गरेको नावमा हामी उफ्रयौं।

"सोमबारसम्मलाई बिदा !" गाँउ र उनीहरू अदृश्य नभइन्ज्येलसम्म हामी करायौं अनि हात हल्लायौं। हामी मेरी, ईश्वरकी आमाको सम्मानमा आयोजन गरिएकोको शोभायात्रामा भागलिनलाई केसरलतर्फ लाग्यौं।

नाव विस्तारसित हरियो पानीमा हिड़नथाल्यो। अस्ताउन लागेको घामले क्षितिज सुन्तले रंगको बनाएको थियो। नदीका दुवै किनारमा हावाले खजुरका रूखहरू र हरिया धान खेतहरू हल्लायो। नावमा भएका नब्बेजना लोग्नेमानिस, स्त्री र नानीहरूले हात जोड़े, ईश्वरको महिमा गाए। फिलो र मपनि उनीहरूसंग गाउन लाग्यौं। नदी पारी अध्याँरा रूखहरूको थुप्रोबाट रात सुस्तरी पर्न लागेको थियो। तर यो के रात्री हो ? मैले मनै प्रश्न गर्दै–नाव खियाउने काठमा बसेका बलिया अनि वयस्क नाविकलाई हेरें। नाविकले आफ्नो आँखीभौंको सहायताले नियालेर आकाशतिर हेरे। हठात चिसो हावाको झोंका पानीमाथि आयो र पानीमा छाल आयो। नाव हल्लियो, नानीहरू चिच्चाए।

"यो केही पनि होइन, केही पनि होइन, शान्त होऊ?" अरू नाविकहरू कराए। तर जंगलको पछिल्तिरबाट निस्केको कालो डरलाग्दो बादलले उनीहरूको भनाइलाई निरर्थक बनाएको थियो।

नदीमा परिवर्तन आएको थियो। पानीको छालले नाव हल्लायो अनि तख्तीमा ठोक्किन पुग्यो। नानीहरू उनीहरूको आमाको काखमा थुप्रे। अनि मानिसहरू चिन्तित आँखाले टाड़ो किनारमा एकोहोरिएर हेरे। हामी नदीको माझमा थियौं।

म फिलोमिना तिर फर्कें। "म पौडन सक्तिन," उसले सानो स्वरमा भनी। उसको अनुहार फूंग उड़ेको खरानी जस्तो भयो। म पौडन जान्दछु तर नावमा भएका धेरैले जान्दैनन्। मेरो ढाड़ डरले थरथरायो। आफै आफ हामी प्रार्थना गर्न थाल्यौं। "हे ईश्वर। हाम्रा पिता !" द्रुत गतिमा अन्धकार भइरहेको आकाशमा हाम्रो प्रार्थना सुनिएन अनि बतासको हुरीमा बिलीन भयो।

छेउमा बस्ने मानिस करायो, "छिटो केटा हो। छिटो आँधी बेह्री आउन लागेको छ। हामी आँधी बेह्री आउनभन्दा अघिनै अर्को किनारमा पुग्नपर्छ।"

तन्हेरीहरू नावका काठमा भयभित भएर अड़ेसलागे। उनीहरूले भएभरको जोड़ लगाएर नाव खियाए।

नाव-भित्र पानी छिरयो।

"मेरी, ईश्वरकी आमा, हाम्रो लागी प्रार्थना गरिदेउ।"

अशान्त रहेको पानीमा एउटा सेतो ज्योतिले उज्यालो बनायो।

"मेरी, यीशुकी आमा, मानिसहरूकी आमा!..............

"नाव खियाँउदै जाऊ, खियाँउदै जाऊ !" नाविकले गर्जेर भन्यो। हामी एक अर्कासित टाँसिएर प्रार्थना गर्न लाग्यौं।

आँधि बेह्री प्रचण्ड बेगले आयो। नदीले दुख पुकारयो, अनि नाव पानीको तीव्र बेगमा असहाय भएर यत्र तत्र ठोक्किन लाग्यो। अकस्मात हावाको झोकाँले नावको पानी माथिको भागमा यत्ति जोड़ले हिर्कायो कि हामी बसेका ठाउँबाट हामीलाई वाहिर फ्याँकियो। चित्कार गर्दै हामी मुनि भएका नानीहरूलाई खुट्टाले हिर्काउदै

एक अर्का माथि लड़यौं। कसैको कुइनाले मेरो अनुहारमा लाग्यो, एउटा घुँड़ाले मेरो छेउमा हिर्कायो।

"फेलिसि, फेलिसि," मैले फिलो भेटने कोशिश गरे, तर हात भेट भएन। धीमासित फुटेर नाव हामीलाई खलबलिएको नदीमा फ्याँकेर छेउपट्टि हुत्तियो। चिसो पानीले मलाई छोप्यो, अनि मलाई घुमाएर तल झारयो। मलाई तल झर्दा मैले रोक्ने कोशिश गरें अनि मेरो पाखुरा र खुट्टामा भएको अस्थिरताबाट बाँच्ने कोशिश गरें। एउटा हातले मेरो हात छोयो अनि चिप्लेर गयो –"फिलो, फिलो।"

म जब जमीनमा स्याँ स्याँ गर्दै आएँ मेरो फोक्सो फुटन आँटिको थियो। आफ्नो प्राणको निम्ति मानिस, आइमाइहरू र नानीहरूको आंतकित चिच्चाहटले आकाश ढाकिएको थियो। हातहरूले नावका काठहरू समातेका थिए, नड.रयाएका थिए, एक अर्कालाई जबर्जस्ती घचेट्दै थिए, हताश भएर झुण्डिरहेका थिए अनि अन्तमा पानीको छालले चोबल्लिदै नाव माथि उठयो अनि फेरि डुब्यो।

के म केही सहायता गर्न सक्तिन ? खाली उनीहरू डुबेकोमात्र हेरिरहने ? तीस फिट भन्दा बेसी टाड़ो थिएन, एउटा रूखको ठूटाले उनीहरूलाई सहारा दिन सक्थ्यो। हावाले गर्दा आँखा बन्द गरेर म अघि बढ़ें।

"फेलिसिटास, फेलिसिटास" रूखको ठूटामा पुगेको हात मैले समाते ! आऊ! मार्कुस करायो। "ठेल ठेल" चिच्याउँदा चिच्याँउदै, म त्यो काम्दै गरेको राइमण्ड, डेविड, मार्कुस र मेरीको झुण्डमा बेहोस हुन पुँगे। उनीहरू म जस्तै बाँचेका थिए। तर अरूहरू के भए ? मेरो आत्मीय साथी फिलोलाई?

म पगली भएर कराएछु, "फिलो, फिलु ..........।"

मैले उसलाई खोज्नैपर्छ, उसलाई सहायता गरेर बचाउनै पर्छ।

"होइन फेलिसिटास, हामी यस घरी केही गर्न सक्तैनौ, आँधी बेह्री रोकिओस्।"

म थरथरी काँपि, मेरो अनुहारबाट पानी बग्यो, के यो आँसु थियो?

हठात मेरी कराई-"सुन कसैले बोलाँउदैछ।" हामीले कान ठाड़ो पारयौं, हो "सहायता," सहायता भन्दै कतैबाट आएको झिनो आवाज सुन्दैछौं?

"किन? यो सामुएल डुड.डु.ड. ! यीसु, यीसु ।"

मेरी कराई–"उ डुब्दैछ । उसले केही गर्न सक्तैन, उ पौडन जान्दैन । हे भगवान, उ पानीमुनि पस्यो । पानीको गर्जन र हावाको आवाजमात्र सुनिन्थ्यो ।

मैले डरले मेरीको आँखामा हेरे । त्यसपछि डेभिड, रायमण्ड र मार्कुस । कोही पनि चलेन ।

"सहायता!" उसले फेरि बोलाइरहेको थियो । हाम्रो आँखाको सामुन्ने उ डुब्दै थियो, सामुएल दुड.दुड., हाम्रो भाई ।

हठातमा एउटा विचित्रको निश्चलता मभित्र छायो । म बसें र मेरो साड़ी माथि ताने, कड़ा बण्डल बनाए र मेरो सायामा पटयाएँ । म उठें, हुनु-नु गर्दै गर्जने कालो पानीमाथि कराएँ । "सामुएल, सामुएल दुड.दुड., पर्ख म आँउदैछु ।" अनि पानी भित्र पसें ।

हावासित झगड़ा गर्दै मैले हतार हतार खोजे । मेरो साया-साड़ी पानीले भिजेकोले मलाई तलतिर तान्थ्यो । "सामुएल," म कराएँ, "म यहाँ छु, म यहाँ ।"

केही कुरो पानीमा माथि-तल गरयो, एउटा हात अनि टाउको, सामुएलको टाउको । उ यति नजिकमा थियो कि म उसको डरले काँपिरहेको आँखा देख्न सकें । "सहायता, सहायता," उ करायो ।

"साड़ी समात," मैले उसलाई कराएर भने । "म तिमीलाई वाहिर निकाल्छु । यहाँ समात ।" मेरो कम्मरदेखि साड़ी च्याँति अनि अर्को छेउ दाँतले समाते । सा।ड़ीको ठूलो मुठा उ भएतर्फ फँ्याके । तर हावाले साड़ीको मुठा उकहाँ पुग्न सकेन ।

समात, ढुड.ढुड. ।

पानी कुल्चन्दै, मुटु मुखमा राखी, मैले सामुएल पानीमा छिटो छिटो चालले अघि बढ़दै संघर्ष गर्दै गरेको देखें ।

"समात, ढुड.ढुड., यसलाई समात ।" मेरो पछिवाट आवाजहरू आए ।

"पवित्र यीसु ! उसले सक्दैन, उ डुब्दैछ ।"

अन्धकारमा मैले मार्कुसको स्वर सुने ।

"फेलिसिटास, फेलिसिटास, फर्की आऊ।" म सामुएल विना कहिले पनि बाँच्न सक्दिन।

हठात, साड़ी कसिएर तानियो अनि मेरो दाँतबाट प्रायः फुस्की सकेको थियो। मैले लुगा जोड़सित टोके अनि घुमेर रूखको मुड़ातर्फ जाने कोशिश गरे। मेरो पाखुराको घरि घरि जोड़ लाउँदै, ओठ जोड़ले जोड़ेर खुट्टाले हिर्काउँदैं गएँ। जब मैले अब म नसक्ने रहेछु भन्ने सम्झे मैले आँखा खोले र संसारलाई अन्तिम पटक हेरें। म हिड़ने बेलामा मेरो अघि चार जोड़ी भयभीत आँखाहरू देखें।

"फेलिसिटास, आऊ आऊ ।" म भएभरको शक्तिले अघि सरे अनि मार्कुसको हात समातें। म आइपुगें, म निरापद छु। हामी मिलेर सामुएललाई तान्यौ। उ खोक्तै बान्त गर्देथियो अनि मुखवाट घरि घरि पानी निकाल्दैथिए।

काँम्दै रूँदै हामी एक अर्कामा टाँसियौं। र प्रार्थना गरयौ–हे ईश्वर, हाम्रा पिता। हावाले फेरि अर्को शब्द ल्यायो......"सहायता!"

आफ्नो टाउको विस्तार घुमाएर सामुएल दुड.दुड.ले मलाई हेरयो र सुस्तरी भन्यो–"यो किण्डो हो, जो डुब्दैछ।"

हामी चुपचापसित बस्यौं कोही बोलेनौ। हावाले पनि आफ्नो सास बन्द गरेको जस्तो देख्यौ।

म डरले थरथराएँ। विस्तारसित इच्छा नगरी नगरी उठें र एक चोटि फेरि गर्जने नदीमा फाल मारें।



फरवरी १९६५ को त्यो दूर्भाग्यपूर्ण साँझ। हामीवीचबाट प्रायः पचास जना मरे। लिओ र उसको सारा परिवार, मारगरेट र उनको नानी र मेरो आत्मीय साथी फिलो।

आँधी शान्त भएपछि हामीले रूख छोड़यौं र पौडेर किनारमा पुग्यौं। हामी बाँचेकाहरू पानीको छेउमा जम्मा भयौं र अरू कोही किनार लागेर फर्कन्छ कि भनेर प्रतीक्षा गरि रहयौं। पर्ख्यौं तर ...... व्यर्थैमा।

## रातमा आक्रमण

फरवरी १४, १६८० को रात चिसो र अँध्यारो थियो। कालो बादलको थुप्रोबाट चन्द्रमा निस्कने कोशिशमा थियो तर सकेको थिएन। उत्तर प्रदेशको सानो हरिजन गाउँका रामनगरका नियाम्रो साँगुरो बाटाहरूमा ताजा हिउँको वासना बोकेको हिउँको चिसो हावा चलेर आयो। यसले गह्रौं काठका ढोकाहरू घचघचाए, भित्र पस्ला जस्तो गरेर सग्लै फलामका साङ.लाहरू हल्लायो। ढुंगा अनि गिलो माटोले बनिएको घरहरूका ससाना अग्ला झ्यालहरू हल्लायो अनि आँगनबाट पार गरेर गयो।

सतीश कुमार फुलसिङ.ले हावाको सुस्केरा सुन्यो र थरथर काँप्यो। भान्सा घरको छेउको कोठाको एक कुनामा ओड़ेर सुतेको पातलो सिरकले उसलाई जाड़ो भयो। एउटा पलङ.मा उसको बाबु खोक्यो र पल्टयो, अर्को पलङ.मा सुतिरहेकी उसकी बहिनी सीता आमाको न्यानो अनि सुरक्षित काखमा गई। उ निन्द्रामा सुस्तरी बोली। "श ........... ।"

उसकी आमा निन्द्रामा गुनगुनाई।

अनि सानी छोरीलाई फाटेको कम्बल ओढ़ाइदिइ।

उसको छेउमा, उसको भाई चलमलायो। "यस्तो कष्टदायक जाड़ो ! अरू ओढ़ने केही कुरो छैन?" अरू केही छैन भन्ने कुरो सतीशलाई थाहा थियो। उसको बाबुले श्रमिकको काम गरेर कमाएको पैसा र उसको जेठा दाज्यु विनोदले रिक्सा चलाएर

कमाएको पैसाले आठ जनाको परिवारलाई पाल्न पनि मुश्किल थियो। काका मानचन्दको गाई वस्तु चराएर सतीशले पनि केही पैसा घरमा ल्याँउथ्यो। मानचन्द धनी थिएन। तर उ र उसकी स्वास्नी उमेर गइसकेका थिए। अनि उनका छोराहरू, पनि पटनाजस्ता ठूला शहरमा पैसा कमाउनकालागि धेरै अघिनै गाउँ छोड़ी हिड़ेका थिए। काका मानचन्दले उनीहरू विषय अहिलेसम्म केही सुनेको थिएन। सतीश कुमार फूलसिड. फेरि काँपि तर यस पालो जाड़ोले होइन तर उसको भावी अनिश्चित भाग्यमा। गरीबको जीवन कष्टमय हुन्छ।

त्यहाँ, त्यो हावा होइन, उनीहरूको गहरै गहरा परेको छानामा नांगो खुट्टाको धीमा ढक ढक हिड़ेको आवाज थियो। फेरि सानो स्वरमा कसैले आदेश गरयो–"हिड़, देब्रेपट्टि हिड़। अर्को घरमा भन्दैछु, अर्को घर।"

सतीश हल न चल भयो।

"सतीश," कमराको अन्धकारभित्र उसको पिताले सोधे। "त्यो हिड़ने तिमी हौ?"

"होइन बाबु ! मेरो विचारमा बाहिर मानिसहरू छन्।"

"को, कहाँ" उसकी आमा डराएर सोधी। उनीहरू गाइको बाछा चोर्ने दाउमा छन्।

उसको बाबु गनगनायो, "यो घुमी हिड़ने कुकुर हुनसक्छ।" तर उ आफैलाई विश्वास लागेन। "म दैलोमा ताला लाँउछु।"

सतीशले उसको बाबुले जुत्ता खोजी लगाएको सुन्यो। एक्कासी रात्रीको निस्तब्धता तोड़ेर ठूलो चित्कार आयो अनि भित्तामा कसैले ठूलो मुड़कीले र्हिकायो।

खस्रो आवाजले गर्ज्यो–"खोल, खोल नत्र हामी गोलीले मार्छौं।"

सानो कमरामा कोही चलमल गरेन। त्यसपछि सतीशको आमाले धीमा स्वरमा भनिन्–"चोरहरू, हे भगवान।" केही क्षण भित्रै बाबु दैलोको छेउमा पुग्यो र दैलो ठेल्दै खोल्यो। हामी "आँउदैछौं," सतीश कुमारले भन्यो अनि बाबुलाई पछि छोड़ेर आँगनमा पुग्यो।

अन्धकार रातमा गोली हानेको आवाज आयो अनि एउटी आंतकित आइमाइ कराइ–"सहायता, सहायता चोरहरू।"

"पर्खी" बाबुले आफ्नो गह्रौं हात सतिशको कुममा राख्दै भन्यो। फेरि भन्यो–"पर्खी"। सतिश रोकियो अनि अन्धकारमा खोज्न थाल्यो।

समय चिन्तासित बित्यो। हठात एउटा कालो छाया मानचन्दको घर माथि उफ्रयो अनि घनघोर अन्धरकारमा हरायो। सतिशले भन्यो–"उनीहरू काका मानचन्दको घरको छानामा छन्। हामीले उसलाई सहायता गर्नैपर्छ।"

"एक छिन, छोरा, हामीले, अरूलाई बोलाउनैपर्छ।" "म जान्छु।" सतिशले भन्यो र उ आँगनतर्फ फर्कयो। उ आँगनमा पुग्न अझ आधानै थियो हावामा तीन चोटि फेरि बन्दुक पड्कयो अनि अर्को आवाज सुनियो-"तिमीहरू डरपोक, दैलो खोल नत्र तोड़ी दिन्छौ।"

मानचन्दकी पत्नीको अक्क र बक्क परेको चित्कारले सतिशको आङ चिसो भएर आयो। उ कुदयो। उनले सम्झयो, उनीहरू भत्काएर भित्र पसे। "मैले झट्टै सहायता ल्याउनुपर्छ।" भित्तालाई छाया जस्तो बलियासित समातेर उ तलतिर झरयो।

बाटोमा परेका सबै दैलोहरू ढकढकयाँउदै उ हत्तारमा करायो–"खोल, काका, सहायता। चोरहरू काका मानचन्दका घर फोरेर भित्र पसिसके।"

झ्यालको फलामकोबार पछिल्तिरबाट तर्सेर हेरे। "सतिश, के हो, के हुँदैछ ! हामीले सुनेको बन्दूकको आवाज होइन?"

"चोर, चोर" भन्दै सतिश फेरि करायो। "मानचन्दको घरभित्र, छिटा हतियार निकाल नत्र ती चोरहरूले जम्मै गाँउ लुटनेछन्।"

एउटा बूढ़ो मानिस छक्क परेर भन्यो–"बन्दूक!

गाँउमा बन्दूक छैन। हामी गरीब छौं, हाम्रो झगड़ा गर्नलाई हाम्रा मुढ़कीहरू छन् अनि हामीले गुमाउने कुरामा हाम्रा जीवनमात्रै छ।"

"तर हामी लड़नेछौ," अर्को मानिस कराए। "लौरो, ढुँगा र फलामका छटहरू ल्याऊ, छिटो।"

"चोर, चोर" भन्दै सतिश फाल हान्दै गयो, जम्मै घरहरूको दैलो ढकढकयाँउदै गयो।

जंगलमा लागेको आगो जस्तो खबर घर घर फैलियो। डरलाग्दो अनुहारसित हातमा हँसिया र लौरो बोकेर गाँउमा जम्मै ठाँउका मानिसहरू मानचन्दको घरतर्फ थुप्रे। "तिमीहरू मैला मुसाहरू, हामी तिमीहरूलाई कुकुरलाई जस्तो गोली हान्छौ।"

"ए उनीहरूले हामीलाई मार्देछन्।"

"तिमीहरू प्रत्येकलाई अँध्यारोमा।" उत्तर थियो अनि दुइवटा बन्दूकको गोलीको आवाज ठवास्स गरेर गयो।

"हामी घरमा घेरा हाल्नुपर्छ," सतिशका बाबुले विस्तार भने। "जसरी भए पनि यो देवल नाघिहाल"। "कसरी!" पतला कुर्ता र पैजामा लगाएको, जुङगा तलतिर फर्केको एउटा दुब्लो थर थर काम्दै गरेको मानिसले सोधे। "हाम्रो नाखको टुप्पासम्म पनि देखे उनीहरूले गोली मार्नेछन्।"

"अन्धकारले गर्दा हामीलाई सुबिधा छ। उनीहरूले हामीलाई देख्ने छैनन्" विनोद कुमार फुलसिंहले भने। "हामी जाँऊ। तर हामीहरूले पनि उनीहरूलाई देख्दैनौं" दुब्लो मानिसले रिसाएर भन्यो।

कुराकानी हुँदा हुँदै कसैले नदेख्ने गरी सतिश हिड्यो। जम्मै कुना काप्चा जानेको हुनाले, बिरालोको जस्तो सहजतामा सतिश आफ्नो पट्टिबाट देवलमा चढ़ेर आँगनमा पुग्यो। चिसो खस्रो ढुंगामा झुंडेर सतिश टुप्पोमा पुग्यो र आफ्नो छिमेकीको आँगनमा तल हेरयो। दुइवटा छाया मानचन्दको घरको कौसीतर्फ देखियो अनि अँध्यारोमा विलीन भयो। दाहिने पट्टि तितिरीको रूखको पछिल्तिरबाट बेटरीले स्वचालित बत्तिको उज्यालो देखियो। यो अकस्मात आएको उज्यालो किरणले सतिशको आँखा प्रायः नदेख्ने भयो। बत्तिको उज्यालो भूइँमा झर्‍यो अनि घुम्दै दैलोमा पर्‍यो। "कोही भूलले यताउति भएको खण्डमा उसको मृत्यु अवश्य हुनेछ," रूखको पछिल्तिर बाट कोही करायो।

उज्यालो यता उति घुम्न थाल्यो अनि नतर्केको भए सतिशको अनुहारमा पर्नेथियो। "चोर बदमासहरू" दाँत किट्दै उसले भन्यो। "हामी तिमीहरूलाई देखाँउछौं।" कौसीको पछिल्तिर भएको तीनवटा खाँबाहरूमा एउटा खाँबोको पछिल्तिरबाट सतिशले हाँस्दै गरेको अर्को एउटा आकार देख्यो जो ठूलो स्वरले

करायो–"तिमीहरू आफ्ना आफ्ना ठाँउमा फर्क, मुसाहरू !"

दुइवटा खुट्टा फिँजाएर बलको तुजुक गर्दै बन्दूक तयार राखेर उभिएको तिरस्कृत आकारलाई हेर्दै आँखा यता उती पनि नगरी रीसले क्रुर भएर सतिश अघि घस्र्यो।

सतिशपट्टि उज्यालो आयो। मुटुलाई मुखमा ल्याएर उसले, देवलको टुप्पामा आफ्ना अनुहार तल लुकायो अनि पर्ख्यो। उनीहरूले उसलाई देखे उसको मृत्यु हुनेछ। तीन फीट भन्दा केही टाड़ामा उज्यालो रोकियो, घुम्यो अनि फेरि दैलोमा पर्‍यो।

दैलोको खाड़लमा उसले नङ गाडयो। उसलाई आफूले समातेको इटाँ हल्लेको जस्तो लाग्यो अनि अलिक खुकुलो पारयो। सेकेण्ड पनि अवेर नगरेर उ घुँड़ा टेकेर उठयो, ताकयो अनि आफूमा भएभरको बलले ढुंगाले तल बन्दूकधारीलाई हिर्कायो जो दस गजभन्दा टाड़ो पनि थिएन। इँटाले बन्दूकधारीलाई यति जोड़ले लाग्यो कि दुवै बन्दूकधारी र बन्दूक जमीनमा झरे। आफ्नो आँगनको आश्रयमा जानभन्दा अघि चोरले खुट्टा हल्लाँउदै ठूलो रीसमा कराएको सुन्यो-"त्यसलाई समात, मार।" उसले बन्दूक गालामा राख्यो र ट्रिगर तान्यो एक, दुइ, तीन तर बन्दूकबाट आवाज निस्केन।

' खुशी भएर सतिश भूँइमा झर्‍यो, बाटोमा गयो अनि सोझै बाबुको पाखुरामा पस्यो। "हाम्रो राम्रो मौका छैन। उनीहरू नौजना छन् अनि सबैकोमा बन्दूक छ, हाम्रोमा केही छैन।"

"हाम्रोमा बन्दूक छैन तर उज्यालो पार्नु सक्छौं" सतिशले भन्यो। आँगनको भित्ताको भित्री भाग भएर सतिश एक कुनामा डरले बाँ- - - बाँ- - - गरिरहेको गाईको बाछा भएकहाँ पुग्यो। हत्तारमा उसले केही धानका परालहरू भाँचे अनि जम्मा गरेर कड़ा बण्डल बनाए। उसले डराएको बाछालाई माया गरयो, सुमसुमायो। त्यसपछि फेरि साँगुरो बाटो भएर मानचन्दको दैलो वरीपरी थुप्रेका गाँउलेहरू भएकहाँ सतिश दौड़यो।

"गाँउ बचाउनु हो भने हामीले केही गर्नैपर्छ।" हँसिया हल्लाँउदै, ईटा, ढुँगा जे हुन्छ ल्याऊ, कत्तर सिंह कराए।

चौड़ा कुम भएको मानिसको ध्यान आकर्षित गर्दै सतिशले भने–"काका, तपाईकहाँ माचिस छ।" कत्तरसिंह ध्यानै नदिइ करायो, "माचिस, माचिस।" उसले गोजीमा हेरयो र सतिशको हातमा माचिस राखिदियो। उ फर्केर बन्दभएको दैलो तर्फ जाइ लाग्ने प्रकारले कराए–"यसलाई लात मार, छानामा चढ़, आऊ तिमीहरू सबै तिमीहरू डरपोक भयौ, म लड़ाई गर्छु।"

"म पनि लड़ाई गर्छु"–सतिशको बाबुले पनि उत्तर दिए।

सतिशले "म पनि" भन्दै आँगनमा खोलिएको देवलतर्फ लागे। धानको परालको बण्डलमा आगो। लाँउदा उसको हात काम्यो। मुटु धकधकाँउदै उसले परालको आगो फुक्यो। धानको पराल चटटट गर्‌यो। धुवाँ उसको आँखामा पस्यो। उसले खोक्यो। उसले बड़ो सावधानीसित देवलको सानो छेड़बाट निष्पट्ट अँध्यारो आँगनमा चियायो। सर्च लाइट निभाएको थियो।

सतिशले सोच्यो अहिले नै केही गर्नुपर्छ नत्र कहिले मौका आँउदैन।

खुल्ला ठाँउबाट पछि निस्कयो, जल्दै गरेको धानको पराल समात्यो अनि मानचन्दको आँगनको वीचतिर फ्याँकिदियो। यो आकाशवाट झर्ने तारा जस्तो चम्कयो अनि जम्मै इलाकालाई उज्यालो पार्दै भूईंमा झर्‌यो।

छायाहरू खाँबा, रूख र बाकसहरूका पछिल्तिर लुक्न पुगे। "गोली मार। गोली मार !!"

सतिश भाग्यो। बन्दूकका गोलीहरू उसको छेउ छेउबाट गए। शिकाग्मा भाग्ने खरायो जस्तो यता उती गरेर भाग्यो, केही इंचलेमात्र उ बाँच्यो। लथालिङग् दाह्री भएको एउटा बलियो मानिस कराए–"यो लिनु" अनि उसले बन्दूक उठाए।

सतिश देब्रेपट्टि फर्कयो र राम्ररी सफासित थुपारेर राखेको गाईको गोबरको ढिकाहरूको पछिल्तिर लुक्यो। स्याँ- - स्याँ गर्दै हजार सियोहरूले घोचेको जस्तो शरीरमा पीर बोकेर सतिश प्रायः यो थुप्रोमुनि पसेर पर्खे। बन्दूकका गोलीहरू गाईको गोबरको थुप्रोमा बज्रिए। त्यसपछि बन्दूकका गोलीहरू रोकिए।

एक जना चोर गर्जेर भने-"आगो बाटोबाट निकाल, यसलाई निभाइ दे"।

सतिशले सोच्यो–"हुँदैन, यो हाम्रो सबैभन्दा असल हतियार हो।" उसले घस्रन्दै गएर घर तर्फ हेरयो। एउटा कालो कुर्त्ता र पैजामा लगाएको मानिस केही गर्न थालेको थियो। त्यो मानिस धक्का लाँउदै अघि सरयो तर हठात उसको कुमको बिचमा एउटा ईटा् बज्र्यो। उ घरमराँउदै लडयो।

सतिशले पछि फर्केर हेर्दा काका किसनको विजयी अनुहार देवलको पछिल्तिर हराएको देख्यो।

"समात, तिनीहरूलाई समात।" आफ्नो बाबुको उत्साहजनक चिच्च्याहटले सतिशलाई ठूलो बल मिल्यो। अँध्यारोमा हतियारको निम्ति छाम छुम गर्दा उसको हात केही इँटाहरूमा परयो। जम्मै सावधानी बिर्सेर उसले एउटा ईटाँ उठायो, सिधा गरयो अनि फर्किरहेको चोर माथि प्रहार गरयो। ईटाँ त्यस मानिसको च्यापुमा गई बजूरयो। उ बेहोस भएर लड़यो। कष्टले घुंक घुंक आवाज गर्दै उसले आफ्नो हात च्यापुंमा लग्यो। उसको अनुहार रीसले चुरमुरिएको थियो। उसले वरपर फर्किन्दै आफ्नो आक्रमणकारीलाई एक टक लगाएर हेरयो। आगोको विचमा पनि चोर सतिशलाई आक्रमण गर्न तयार थियो। केही बेरसम्म दुवै जनाले एक अर्कालाई हेरे। सतिशले आफ्नो जीवनमा मानिसको आँखामा यस प्रकारको रीस र घृणा कहिल्यै देखेको थिएन। उ काम्यो अनि अर्को इँटा उठाउनलाई निहुरयो। यस पटक सतिशले त्यस मानिसको निधारमा हिर्कायो। मानिस दुइचोटि घुमेर भूईंमा लड़यो।

सतिशको मुखबाट आनन्दको लहर निस्कयो। हामी तिनीहरूलाई भेटछौ, अव तिनीहरूलाई हामी ठीक पार्न सक्छौं भन्दै खुशीले सतिशले तेस्रो इँटा उठायो र गोरूगाड़ी पछि लुकेको चोरहरू माथिताके। उ असफल भएन तर आगोको उज्यालोले लुकेको ठाँउ देखियो।

सतिश घुमेर ताकदै थियो एउटा गोलीले उसको अनुहारको दाहिनेपट्टि लाग्यो। ईँटा समातेरै सतिश कुमार फुलसिंह कुनै शब्द ननिकाली भूईंमा लड़यो। सतिश ! मेरो छोरा ! कुनै आवाज आयो सतिशले आफ्नो बाबुले बोलाएको सुनेन न आँगन सबैतिरबाट थुप्रेका गाँउलेहरूको रिसाएको गर्जन नै सुन्यो। उसको दाज्यूले उसलाई कमरामा आश्चर्यसित तान्दै लगेको मात्र अलि थाहा थियो।

त्यसपछि उसलाई अरू केही थाहा भएन। मानचन्दको आँगनमा गाँउलेहरूले ईँटा, दुंगा र लौरोहरूसित  दुइ घण्टासम्म घमाशान लड़ाई गरेको सतिशलाई थाहा भएन। आफ्नो अनि परिवार बचाउन उनीहरूले हँसिया र घुस्सीको बलले झगड़ा गरे। गाँउलेहरूले चोरहरूका नेता पक्रेर माटोमा घुँड़ा टेक्न लगाएर दुवै हात पछिल्तिर बाँधि दिए।

अन्तमा पुलिसहरू आएर चोरका अगुवा अनि उसका साथीहरूलाई पक्रेर लगे। यो क्षण गाँउका कसैले पनि कहिल्यै बिर्सने छैन।

अनि रामनगरमा यस साहसी वीर बालकलाई कसैले विर्सने छैनन् जसले यी निर्दयी नौजना चोरहरूको आतंकबाट मुक्त गराउन आफ्नो दाहिने आँखाको दृष्टिशक्ति समेत गुमाए।

**सयल लहनुभाई भोया** १ जुन १९६७ गुजरातमा जन्मेकी थिई अनि प्राथमिक शालामा पढ़ी। उ गुजराती बोल्छे। उसका दुइ भाइहरू र एउटी बहिनी छन। उसको बाबु श्रमिक काम गर्छ। उसका रूचिहरू हुन्-संगीत, पढ्नु र खेलकुद।





**सी० गोबिन्दन** १५ अप्रैल १९६६ मा तामिलनाडुमा जन्मेका थिए। अनि कुरूबारापल्ली हाई स्कूलमा पढ़े। उ तामिल अनि अंग्रेजी बोल्छ। उसका छ दज्यूभाइहरू अनि दुइ दिदी बहिनी छन्। उसको बाबु श्रमिक काम गर्छ। उसका रूचिहरू हुन्-पढ्नु, संगीत र खेलकुद।

सोनिया सिन्हाको जन्म नभेम्बर १९६६ मा बिहारमा भएको हो अनि पटनाको सन्त जोसेफ कन्भेन्टमा अध्ययन गरी। उ हिन्दी अनि अंग्रेजी बोल्छे। उसको एक भाई र एक बहिनी छ। उसको आफ्नो बाबु जो एक शिशु बिशेषज्ञ थिए पुस्तकमा वर्णित आगलागीको घटनामा मारियो। उसको रूचि- पढ्नु। उसलाई खेलकुदमा पनि रूचि छ।



**शत्रुधन लाल साहुको** जन्म १६ दिसम्बर १९६६ मा मध्य प्रदेशमा भएको हो। उनले दुर्गको नेहरू प्राथमिक शालामा पढ़े। उसले छत्तिसगढ़ी अनि हिन्दी भाषा बोल्छ। माता पिताको मृत्युपछि तिनलाई जिल्ला साहुसंघले हेर्चाह गरेको थियो। उसका रूचिहरू हुन्–लोक कार्यक्रम, खेलकुद अनि साहसिक कथाका किताबहरू पढ़नु। उसको इंजिनियर हुने इच्छा पनि छ।





**फेलिसिटास सोरेङ** २१ जुन, १९५० मा उड़िस्सामा जन्मेकी हुन्। मेट्रिकुलेसन पास गरेपछि राउरकेलाको सरकारी अस्पतालमा नर्सको तालिम लिइन्। उसले उड़िया, हिन्दी र अंग्रेजी बोल्छे। उसका दुइ भाइहरू र पाँच दिदी बहिनी छन्। उसको बाबु खेतीवाल हो। उसको रूचिहरू मध्ये हुन्–संगीत अनि हतकरघा

**सतिश कुमार फुलसिङ्को** जन्म उत्तर प्रदेश मा १९६८ माभएको हो। उ स्कूलमा पढ़ेन। अरूको गाईवस्तुको हेर्चाह गरेर उसले आफ्नो परिवारको आयमा केही सहायता गर्थ्यो। उ हिन्दी बोल्छ। उसका दुइ दाज्युहरू र एक बहिनी छन्। उसको बाबुले श्रमिक काम गर्छ।



